# ॥ श्रीः ॥

# भर्तृहरिकृत नीतिशतकम्

## भर्तृहरिद्वारा बाह्रौं शताब्दीमा लिखित “नीतिशतकम्”

नेपालीमा भावानुवाद : मोहनप्रसाद सापकोटा

## दुई शब्द

नीतिका कुरा गर्दा आज भोली मुण्टो बटार्ने प्रचलन छ किन कि हाम्रो समाजमा कुनीतिमा चल्नेहरूकै उन्नति र प्रगति भइरहेको देखिन्छ । अन्तिम सत्य नीतिले बताइरहेको हुन्छ भने अन्य कुराहरु क्षणिक वा असत्य हुन्छन् । नीतिशास्त्रमा बताइएका अनेकौं कुराहरु व्यवहारतः पेचिला र मन छुने खालका हुन्छन् । सत्य हुन्छन् त्यसैले यी अप्रिय लाग्दछन् । कुलतमा फसेकालाई छुटाउन जति कठिन हुन्छ त्यति नै कठिन कुनीतिमा अभ्यस्त भइरहेको समाजलाई सुनीतिका कुरा सिकाउनु हुन्छ । यो लघुग्रन्थले व्यवहारतः सत्य तर अप्रिय धेरै कुराहरुलाई समेटेको छ । सुध्रिन वा सुधार्न चाहनेलाई पाच्य हुने अनेकौं खुराक यसमा छन् ।

-भावानुवादक (मिति : २०७८।८।१)

## ॥ श्रीः ॥
## भर्तृहरिकृत नीतिशतकम्

॥ श्रीः ॥
भर्तृहरिकृत नीतिशतकम्
(सातौं शताब्दीतिर लेखिएको अनुमान)
ॐ श्रीगणेशाय नमः

**दिक्कालाद्यनवच्छिन्नानन्तचिन्मात्रमूर्तये ।**
**स्वानुभूत्येकमानाय नमः शान्ताय तेजसे ॥१॥**

दश वटै दिशा तथा तीन वटै कालमा परिपूर्ण, अनन्त एवं चैतन्यस्वरूप, आफ्नै अनुभवबाट प्रत्यक्ष हुन योग्य, शान्त र तेजरूपी परब्रह्मलाई नमस्कार गर्दछु ।

**यां चिन्तयामि सततं मयि सा विरक्ता**
**साप्यन्यमिच्छति जनं सजनोऽन्यसक्तः ।**
**अस्मत्कृते च परितुष्यति काचिदन्या**
**धिक् तां च तं च मदनं च इमां च मां च ॥२॥**

म जसको प्रेममा रातोदिन डुबिरहन्छु, एकछिन पनि म जसलाई बिर्सन सक्दिन, हो तिनी, तिनी भने मलाई मन पराउँदिनन्, कुनै अर्कै पुरुषलाई मन पराउँदछिन् । उता त्यो पुरुष, जसलाई मेरी प्रेयशी मन पराउने गर्दछिन्, कुनै अर्कै स्त्रीलाई मन पराउँदछ । फेरी उसकी ती प्रेयशी भने मलाई माया गर्दछिन् । यसैले मेरी प्रेयशी, मेरी प्रेयशीका प्रेमी, प्रेमीकी प्रेयशी, तिनको प्रेमी म र ती कामदेव जसको मायाले यस्ता कार्य हुने गर्दछन्, सबैलाई बारम्बार धिक्कार गर्दछु ।

**अज्ञः सुखमाराध्यः सुखतरमाराध्यते विशेषज्ञः ।**
**ज्ञानलवदुर्विदग्धं ब्रह्मापि च तं नरं न रञ्जयति ॥३॥**

के राम्रो के नराम्रो भनेर थाहा नपाउने अज्ञानीलाई सम्झाउन सजिलो हुन्छ, भलो कुभलो थाहा पाउने ज्ञानीलाई सम्झाउन त झन् सजिलो हुने नै भयो । तर अल्पज्ञानी र आफैँलाई पण्डित ठान्ने व्यक्तिको चित्त बुझाउन स्वयं सृष्टिकर्ता ब्रह्माले पनि सक्दैनन् ।

**प्रसह्य मणिमुद्धरेन्मकरवक्त्रदंष्ट्राङ्कुरात् ।**
**समुद्रमपि सतरेत्प्रचलदूर्मिमालाकुलम् ॥**
**भुजङ्गमपि कोपित शिरसि पुष्पवद्धारयेत् ।**
**नतु प्रतिनिविष्टमूर्खजनचित्तमाराधयेत् ॥४॥**

मानिसले मन लागे बरु गोहीका दाह्राबाट अड्किएको मोती निकाल्न खोज्नू, चञ्चल छालले उथलपुथल भइरहेको समुद्र पौडेर तर्न खोज्नू, रिसले भुनभुनिइ रहेको सर्पलाई फूलको माला बेरे जसरी घाँटीमा बेर्न खोज्नू, तर हठी र मूर्ख मानिसलाई सन्मार्गमा लेराउने दुस्साहस कहिल्यै नगर्नू ।

**लभेत सिनकासु तैलमपि यत्नतः पीडयन् ।**
**पिबेच्च मृगतृष्णिकासु सलिलं पिपासार्दितः ॥**
**कदाचिदपि पर्यटञ्छशविषाणमासादयेन् ।**
**न तु प्रतिनिविष्टमूर्खजनचित्तमाराधयेत् ॥५॥**

मानिसले कुनै जुक्ति लगाएर बरु बालुवा पेलेर तेल निकाल्ने प्रयाश गर्नू, कुनै बेला बरु मृगतृष्णाको जलले भए पनि आफ्नो तिर्खा मेटाउन खोज्नू, बरु पृथ्वीभर घुमेर खरायोको सिङ खोज्नू, तर मूर्ख मानिसलाई सन्मार्गमा लेराउने दुस्साहस कहिल्यै नगर्नू ।

**व्यालं बालमृणालतन्तुभिरसौ रोद्धुं समुज्जृम्भते ।**
**छेत्तुं वज्रमणीञ्शिरीषकुसुमप्रान्तेन संनह्यते ॥**
**माधुर्यं मधुविन्दुना रचयितुं क्षाराम्बुधेरीहते ।**
**नेतुं वाञ्छति यः खलान्पथि सतां सूक्तैः सुधास्यान्दभिः ॥६॥**

जो मानिस आफ्नो अमृतमय उपदेशले मूर्खलाई सन्मार्गमा लेराउने चाहना गर्दछ, उ ती मानिसहरूले जस्तै अनुचित काम गर्दछ जो कमलको डाँठले हात्तीलाई बाँध्न चाहन्छन् वा जो शिरिषको नरम फूलका पत्तीले हिरालाई प्वाल पार्न चाहन्छन् वा जो एक थोपा मह हालेर सागरलाई मीठो बनाउन चाहन्छन् ।

व्याख्याः पृथ्वी भरी रहेका गुलिया कुरा हाले पनि समुद्रको पानी गुलियो हुँदैन । गधालाई उपदेश दिने पनि गधा नै हुन्छ । हजारौं उपाय गरे पनि बकुल्लोले सुँगाले बोले जसरी मानिसले सिकाएको बोली बोल्दैन । बेतमा कहिल्यै फल लाग्दैन । कुकुरको पुच्छर कहिल्यै सिधा हुँदैन ।

**स्वायत्तमेकान्तगुणं विधात्रा, विनिर्मितं छादनमज्ञतायाः ।**
**विशेषतः सर्वविदां समाजे, विभूषणं मौनपण्डितानाम् ॥७॥**

ब्रह्माले मूर्खलाई मूर्खता लुकाउन "चूप रहनू" भनेर राम्रो उपाय बताइ दिएका छन् र उसलाई त्यो उपाय अपनाउन सक्ने पनि बनाइ दिएका छन् । मौन रहनु भनेको मूर्खता छोप्ने बिर्को हो । यति मात्र होइन विद्वानको समाजमा यही "मौनता" उसको गहना पनि हो ।

व्याख्या : जबसम्म मूर्ख व्यक्ति चूप रहन्छ, तबसम्म उ पनि विद्वान नै ठानिन्छ । धेरै सुन, थोरै बोल । यसैले ईश्वरले तिमीलाई धेर सुन्नका लागि दुई वटा कान र थोरै बोल्नका लागि एउटा जिभ्रो बनाई दिएका हुन् । हेर त ! नबोल्दासम्म काग र कोइली छुट्याउन कति मुस्किल पर्दछ ।

**यदा किञ्चिज्ज्ञोऽहं द्विप इव मदान्धः समभवं,**
**तदा सर्वज्ञोऽस्मीत्यभवदवलिप्तं मम मनः ।**
**यदा किञ्चित्किञ्चिद्बुधजनसकाशादवगतं,**
**तदामूर्खोऽस्मीति ज्वर इव मदो मे व्यपगतः ॥८॥**

जब म अलिअलि जान्ने भएँ, तब मदान्ध हात्तीझैं हुन पुगेँ । त्यतिबेला मेरो घमण्डी मन, म नै सर्वज्ञ हुँ भन्ठान्दथ्यो । तर, जब मैले विद्वानहरूको सङ्गत गरेर केही जाने, केही सिकैं, तब मलाई आफू मूर्ख भएको महशूष भयो र शरीरमा आएको जरो झरे जसरी मेरो घमण्ड पनि खालकखुर्लुक भएर झर्न पुग्यो ।

व्याख्या : अल्पज्ञ अति नै अभिमानी हुने गर्दछ । जे जति पढेर जानेको हुन्छ उ त्यसैलाई उत्कृष्ट र त्यो ज्ञान पाएकोमा आफूलाई सर्वोत्कृष्ट ठान्ने गर्दछ । अर्को शब्दमा भन्ने हो अल्पज्ञानी कुवाको भ्यागुतो जस्तै अभिमानी हुन्छ । आफू बसेको कुवा जति सुन्दर, सफा र ठूलो अरु संसार नै हुँदैन भन्ने खालको सोच बोक्दछ । जति बढी पढ्दै गयो, जति बढी घुम्दै सिक्दै गयो, त्यति बढी आफू अनभिज्ञ रहेको आभाष हुन थाल्दछ । मैले जेजति पढेँ, जाने, सिकेँ त्यो त नगण्य रहेछ भन्ने बोध हुन पुग्दछ । पढेर अभिमानी हुने व्यक्तिभन्दा बरु अनपढ नै भएको वेश हुन्छ किन कि पढेको अभिमानीले समाजलाई सही मार्ग देखाउन नै सक्दैन ।

**कृमिकुलचितं लालाक्लिन्नं विगन्धि जुगुप्सितं,**
**निरुपमरसं प्रीत्या खादन्नरास्थि निरामिषम् ।**
**सुरपतिमपि श्वा पार्श्वस्थं विलोक्य न शङ्कते,**
**नहि गणयति क्षुद्रो जन्तुः परिग्रहफल्गुताम् ॥९॥**

जसरी मानिसले घृणा गर्ने, स्याउँस्याउँ कीरा परेको, र्‍याालयुक्त, दुर्गन्धित र रस-मासु नभएको कुरा मस्तसँग खाइरहेको कुकुरले नजिकै आएर उभिइरहेका इन्द्रलाई पनि शङ्का (मतलब) गर्दैन, त्यसैगरी क्षुद्र (नीच स्वभावका) व्यक्तिहरु आफूले क्षुद्रता ग्रहण गरिरहँदा पनि कसैको केही मतलब गर्ने गर्दैनन् ।

व्याख्या : नीच मानिसको स्वभाव कुकुरको जस्तै हुन्छ । जसरी कुकुर अति नै घिनलाग्दो कुरा पनि आनन्द मानेर खान्छ त्यसरी नै नीचहरु अत्यन्त घृणित कर्म पनि लाजै नमानी गरिरहेका हुन्छन् । कसैले भन्नु नभन्नु भने पनि वा लात्ते लात्तले भकुरे पनि तिनैले एकछिनपछि केही दिए सबै कुरा बिर्सी मजाले हात थापी दिन्छन् । नीचलाई संसारमा सित्तैमा केही पाउनु नै सबै थोक हो जस्तो लाग्दछ ।

**शिरः शार्वं स्वर्गात्पशुपतिशिरसस्तः क्षितिधरं,**
**महीद्रादुत्तुङ्गादवनिमवनेश्चापिजलधिम् ।**
**अधोऽधो गङ्गेयं पदमुपगता स्तोकमथवा,**
**विवेकभ्रष्टानां भवति विनिपातः शतमुखः ॥१०॥**

गङ्गा (नदी) पहिलोपटक स्वर्गबाट भगवान् शिवको टाउकामा खसिन् । फेरी शिवको टाउकोबाट हिमालयको टुप्पोमा खसिन् । हिमालयबाट पृथ्वी (को तल्लो भाग) मा खसिन् । अनि फेरी समुद्रमा खस्न पुगिन् । यसरी माथिबाट तल तल खस्दै जाँदा उनको महत्व पनि खस्कँदै गयो र अन्तमा अस्तित्व नै लोप भयो। यस्तै हालत ती व्यक्तिहरूको पनि हुन्छ, जो विवेकभ्रष्ट वा विवेकशून्य हुने गर्दछन् । तिनको पनि गङ्गाको जसरी नै पटक पटक सैयौं पटक पतन हुने गर्दछ ।

व्याख्या : विवेकले विचारशक्ति जन्माउँदछ । विचारशक्तिले गर्न हुने र नहुने कुराको निर्णय गर्दछ । यसैले विवेक गुमेपछि मानिस कर्तव्य अकर्तव्य भुली माटोमै मिल्नेगरी पतनतिर लाग्दछ । पौराणिक कथामा स्वर्गबाट पतन भएकी गङ्गा, वृन्दासँगको मर्यादा गुमाउँदाका विष्णु, सीता हरण गर्दाका रावण आदिका विवेक गुमाउँदाका परिणाम बताइएका छन् । गीत सङ्गीत सुन्न धाउँदा धाउँदै वेश्याप्रिय बनेर पतन भएका मानिस अहिलेकै समाजमा पनि अनेकौं छन् । अलिकलि पिउँदा पिउँदै आफूले आफैंलाई समेत नचिन्ने तहसम्म मदीरा पिउनेहरु पनि हाम्रा समाजमा प्रशस्त देखिन्छन् । मूर्खलाई सुधार्न स्वयं ब्रह्मा पनि असमर्थ छन् त्यसैले एक पटक सम्झाउँदा नसम्झने यस्ता पतनोन्मुख व्यक्तिसँग तर्कनु नै बुद्धिमानी हुन्छ ।

**शक्यो वारयितुं जलेन हुतभुक्छत्रेण सूर्यातपो,**
**नागेन्द्रो निशिताङ्कुशेन समदो दण्डेन गोगर्दभौ ।**
**व्याधिर्भेषजसंग्रहैश्च विविधैर्मन्त्रप्रयोगैर्विषं,**
**सर्वस्यौषधमस्ति शास्त्रविहितं मूर्खस्य नास्त्यौषधम् ॥११॥**

पानीले आगो निभाउन सकिन्छ । सूर्यको प्रचण्ड रापलाई छाताले छेक्न सकिन्छ । हात्तीलाई तीखो अङ्कुशको सहायताले वशमा पार्न सकिन्छ । दण्ड दिएर गाई,गधा आदि जनावरलाई नियन्त्रणमा लिन सकिन्छ । औषधीले रोग पनि निको पार्न सकिन्छ । विष (को प्रभाव) लाई पनि अनेक मन्त्रको प्रयोग गरेर बेअसर बनाउन सकिन्छ । यसरी सबै कुराको औषधी वा उपाय शास्त्रमा छ तर मूर्खको कुनै औषधी छैन ।

व्याख्या : मूर्खको औषधी हुँदैन । हाम्रा सबै नीतिशास्त्रमा यो कुरा उल्लेख छ । शेक्सपियर पनि आफ्नो पुस्तक “याज यू लाइक इट” मा लेख्दछन्- मूर्ख आफूलाई बुद्धिमान सम्झन्छ, तर बुद्धिमान् आफूलाई मूर्ख सम्झन्छ” ।

**साहित्यसङ्गीतकलाविहीनः, साक्षात्पशुः पुच्छविषाणहीनः ।**
**तृणं न खादन्नपि जीवमान, तद्भागधेयं परमं पशुनाम् ॥१२॥**

साहित्य, सङ्गीत र कला विहीन (आफ्नै नभएको वा आफ्नो मन नपराउने समेत) मानिस सिङ र पुच्छर नभएको पशु समान हो । यस मामिलामा शाकाहारी पशुहरूलाई भाग्यमानी नै मान्नु पर्दछ धन्न यस्ता मानिस घाँस नखाइकन बाँचिरहेका छन् ।

व्याख्या : मानिसले घाँस खान थाले विचरा पशुहरूलाई आफ्नै पेटभर्न पनि समस्या हुन्थ्यो र भोकभोकै मर्दथे । मानिस जन्मनासाथ जात, रुप र वर्णमा विवाद गर्दछ । जातको कुरा त धेरै परको कुरा, जन्मनासाथ त मानिस पनि पशु समान नै हुन्छ । मानिस भएर जन्मिएपछि साहित्य, सङ्गीत र कलामा धेरथोर अभिरुची हुनै पर्दछ, राख्नै पर्दछ, नत्र ऊ पशुभन्दा पनि तल खस्दछ । सङ्गीत सुनेर पशुपंक्षीसमेत आकर्षित हुने गर्दछन् । खानपिन, निद्रा, मैथुन सबै जीवले गर्दछन् । मानिस र पशु छुट्याउने एउटा मात्र आधार विवेक हो । विवेकले नै कर्तव्य अकर्तव्य वा धर्म र अधर्मको ज्ञान दिन्छ । विवेक नभएपछि मानिस र पशुमा कुनै भिन्नता बाँकी रहँदैन । सङ्गीतका बारेमा भनिएको छ कि पूरै शरीर सुकाएर तपस्या गर्दा पनि खुशी नभएका शिव, रावणले ताण्डवस्तोत्र गाउँदै नाचेपछि खुशी भए । श्रीकृष्णले बाँसुरी बजाएपछि गोपिनीहरु सबै कुरा बिर्सेर उनका वरीपरी झुम्मिन्थे ।यहाँसम्म कि उनको बाँसुरीको धुनले एकपटक जमुना नदी र चन्द्रमा समेत नचली स्तब्ध भएको कथा पाइन्छ । समग्रमा विद्वानहरु साहित्य, सङ्गीत र कलाप्रिय हुन्छन् भने मूर्खहरू व्यसन, निद्रा र विवादप्रिय हुन्छन् ।

**येषां न विद्या न तपो न दानं ज्ञानं न शीलं न गुणो न धर्म ।**
**ते मर्त्यलोके भुवि भारभुता मनुष्यरूपेण मृगाश्चरन्ति ॥१३॥**

जसले न पढे, न तपस्या गरे, न त दान नै दिए, न ज्ञान आर्जन गरे, न सच्चरित्रलाई अँगाले, न गुण सिके, न त धर्मकर्म नै गरे, ती पृथ्वीको बोझ बढाउने मानिसरूपी मृग (सरहका पशु) हुन् ।

व्याख्या : यदि मानिसमा गुण बढाउने र परोपकार गर्ने चाहना छैन भने उ र भित्तोमा कोरिएको चित्रमा कुनै फरक हुन्न । मानिस तबमात्र पूर्ण वयस्क मानिन्छ जब उसमा अध्यात्मचिन्तन जाग्दछ । उमेर भर अध्यात्म चिन्तन जागेन भने उ मानिस नै होइन । विवेक नगुमाउने गरी पढेको छ ? अहँ छैन । कुनै असल कार्यमा तनमन दिएर लाग्दछ ? अहँ लाग्दैन त । आफूले असल कर्मगरी कमाएको केही कुरा अरु कसैलाई दान दिन्छ ? त्यो पनि दिँदैन । केही कुराको ज्ञान छ त उसलाई ? त्यो पनि छैन । यो चाहीँ राम्रो छ भन्ने उसको केही स्वभाव छ त ? छैन हो छैन । उसका कुनै गुण त पक्कै होला ? अहँ त्यो पनि छैन । धर्म त पक्कै गर्दो हो ? अहँ त्यो पनि गर्दैन । त्यसोभए त्यो पशु पृथ्वीका लागि बोझ मात्र हो । उसका विषयमा अरु बढी कुरा गर्नु नै निरर्थक हुन्छ ।

**वरं पर्वतदुर्गेषु भ्रान्तं वनचरैः सह ।**
**न मूर्खजनसम्पर्कः सुरेन्द्रभवनेष्वपि ॥१४॥**

बरु पहाड, किल्लातिरका वन्यजन्तुसँग घुम्नू (रम्नू) तर इन्द्रकै दरबारमा बसेको भएपनि मूर्खसँग सम्पर्क नबढाउनू ।

व्याख्या : दुष्ट स्वभावको साँढे पाल्नुभन्दा वरु गोठ सुनसान भएको वेश । कुलघरानकी तर दुष्ट चरित्रकी पत्नी हुनुभन्दा बरु कुनै वेश्या पत्नी हुनु वेश । मूर्खको शासन झेलेर बस्नुभन्दा बरु बनमा गएर बस्नु वेश । नीचको सङ्गत गर्नुभन्दा बरु मर्नु वेश । जोसँग सिक्न दुष्टता मात्र हुन्छ त्यस्ता व्यक्तिको सङ्गतले साधु समेत दुष्ट बन्न पुग्दछ । धुरन्धर नीतिज्ञ मानिने रावणको बुद्धि सूर्पणखाको एकैछिनको सङ्गतले नासियो । जर्मन लोकोक्ति छ कि “पढेलेखेका मूर्ख अरु सबै खाले मूर्खभन्दा खतरनाक हुन्छन्” । भारी बोक्ने गधालाई आफैँले बोकेको चन्दनको महत्व थाहा हुँदैन । विद्याले बुद्धिमानलाई अझ बुद्धिमान र मूर्खलाई अझ मूर्ख बनाउँदछ । निकृष्ट किसिमको फलामबाट राम्रो तरबार कहिल्यै बन्दैन । बादलले पानी पार्न भेदभाव गरेको त हुँदैन नि ! तर त्यही पानीले कतै फूल उम्रन्छ भने कतै घाँस । खुराफाती दिमाग लिएर मठमन्दिर धाए उसमा खुराफाती क्षमता वृद्धि हुन्छ, पापी मन लिएर गए पाप गर्न अझ मन लाग्दछ, त्यसैले अन्तस्करण शुद्ध बनाएर मात्र धर्मकर्म गर्नू ।

**शास्त्रोपस्कृतशब्दसुन्दरगिर शिष्यप्रदेयागमा-**

**विख्याता कवयो वसन्ति विषयेयस्यप्रभोर्निर्धनाः ।**
**तज्जाडयं वसुधाधिपस्य कवयोह्यर्थं विनापीश्वराः,**
**कुत्स्याः रयुःकुपरिक्षका हिमणयो यैरर्घतः पातिताः ॥१५॥**

जो कविका वचन शास्त्र अध्ययनका कारणले शुद्ध र सुन्दर छ, जोसँग शिष्यलाई पढाउने योग्यता छ, जो आफ्नो विद्याका लागि प्रसिद्ध छन्, यस्ता विद्वान् जुन राजाका राज्यमा निर्धन हुन्छन्, त्यो राजा निःसन्देह मूर्ख हो । कवि त धन नहुँदा पनि श्रेष्ठ हुन्छन् नै । रत्नपारखीले कुनै रत्नको मूल्य घटाउँदैमा रत्नको (वास्तविक) मूल्य घट्दैन । रत्नको मूल्य त जति हो त्यति नै रही रहन्छ। मूल्य घटाउनेलाई भने अबुझ मानिन्छ ।

व्याख्याः कसैले बाटामा हीरा भेट्टाएर फाल्यो भन्दैमा हीराको मूल्य कम हुँदैन । भमरा टाढाबाट आएर कमलको रस पिउँदछ तर त्यसैको फेदमा हरहमेशा बस्ने भ्यागुतो त्यो रसको आनन्द लिँदैन, लिन जान्दैन । भ्यागुतोले पिएन भन्दैमा कमलको रसको महत्व कम हुँदैन । मूर्खले विद्वानहरूप्रति त्यस्तै सोच राखेको हुन्छ जस्तो सोच दृष्टिविहीनले सुन्दरीहरूप्रति र नास्तिकले शास्त्रहरूप्रति राख्ने गर्दछ । गुनीले नै गुनको कदर गर्न जान्दछ, बेगुनीले जान्दैन ।

**हर्तुर्याति न गोचरं किमपि शं पुष्णाति यन्सर्वदा,**
**ह्यर्थिभ्यः प्रतिपाद्यमानमनिशं प्राप्नोति वृद्धिं पराम् ।**
**कल्पनिष्वपि न प्रयाति निधनं विद्याख्यमन्तर्धनं,**
**यषां तान्प्रति मानमुञ्झत नृपाः कस्तैःसह स्पर्द्धते ॥१६॥**

जुन धनलाई चोरले देख्न सक्दैन, जसबाट सदा सुखको वृद्धि भइरहन्छ, माग्नेलाई दिँदा पनि जुन धन सधैं बढिरहन्छ, प्रलय हुँदा पनि जुन धनको नाश हुँदैन, यस्तो धन हुनेसँग कसैले प्रतिस्पर्धा गर्न सक्दैन । त्यसैले, हे (धन वा शक्तिले) उन्मत्त (धन वा शक्तिका) राजाहरू हो ! यस्तो विद्यारूपी गुप्त धन हुनेहरूका अगाडि कहिल्यै अभिमान नगर । (विद्वानका अगाडि पद, शक्ति र धनको तुजुक मूर्खहरूले मात्र देखाउँदछन्) ।

**अधिगत परमार्थान् पण्डितान्मावमंस्था-**

स्तृणमिव लघुलक्ष्मीर्नैव तान्संरुणद्धि ।
अभिनवमदलेखाश्यामगण्डस्थलानां,
न भवति विसतन्तुर्वारणं वारणानाम् ॥१७॥

(हे राजा (शाषक) हो !) जसले परमार्थ साधनरुपी ताल्चाको साँचो पाइसकेका छन्, जसलाई आत्मज्ञान भइसकेको छ, तिनलाई अपमान नगर्नु होस् । किन कि तिनलाई घाँससमान तुच्छ लक्ष्मीले त्यसरी नै रोक्न सकिन्न, जसरी नवीन मदको धारा बहाइरहेको कालो टाउके हात्तीलाई कमलनालको डोरीले रोक्न सकिन्न ।

अम्भोजिनीवननिवासविलासमेव, हंसस्य हन्ति नितरांकुपितो विधाता ।
न त्वस्य दुग्धजलभेदविधौ प्रसिद्धां वैदग्धकीर्तिमहपर्त्तुमसौ समर्थः ॥१८॥

विधातालाई हाँससँग उठनुसम्म रिस उठ्दा पनि (उ खेल्ने) उसको निवासस्थल कमलको वनलाई उसले गर्ने विलासलाई नष्ट गर्न सक्दछन् तर, उसको दूध र पानी छुट्याउने प्रसिद्ध कीर्ति (खूबी) लाई स्वयं विधाताले पनि नष्ट गर्न सक्दैनन् ।

केयूरा न विभूषयन्ति पुरुषं, हारा न चन्द्रोज्वला ।
न स्नानं न विलेपनं न कुसुम, नालङ्कृता मूर्द्धजाः ॥
वाण्येका समलङ्करोति पुरुषं, या संस्कृताधार्यते ।
क्षीयन्ते खलु भूषणानि सततं, वाग्भूषणंभूषणम् ॥१९॥

हातमा महगा बाला, घाँटीमा चम्किलो मोतिको माला, नित्य स्नान, चन्दन आदिले शरीरमा गरिने लेपन, फूलले शरीरमा गरिने सजावट वा राम्रोसँग कोरीबाटी गरिएको कपालले (मात्र) पुरुषको शोभा हुँदैन । पुरुषको शोभा त केवल संस्कार गरिएको सुन्दर वचनमा नै हुन्छ । किन की अरु सबै आभूषण (वा श्रृङ्गार) त निश्चय नै नष्ट हुन्छन् तर वचनरूपी गहना भने सधैं रहिरहन्छ ।

विद्या नाम नरस्य रूपमधिकं प्रच्छन्नगुप्तंधनं,
विद्या भोगकरी यशःसुखकरी विद्या गुरुणांगुरुः ।
विद्या बन्धुजनो विदेशगमने विद्या परं दैवतं,
विद्या राजसुपूज्यते नहि धनं विद्याविहीनः पशुः ॥२०॥

विद्या मानिसको वास्तविक रूप र लुकेको धन हो । विद्याले भोग, यश र सुख दिन्छ । विद्या गुरुको पनि गुरु हो । परदेशमा विद्याले नै मित्रताको काम गर्दछ । विद्या नै परम देवता हो । राजा (राष्ट्रप्रमुख) हरुमा विद्या (ज्ञान) कै सन्मान हुन्छ, धनको होइन । विद्या नहुनेहरू पशु हुन् ।

**क्षान्तिश्चेत्कवचेन किं किमरिभिः क्रोधोस्तिचेद्देहिनां,**
**ज्ञातिश्चेदनलेन किं यदिसुहृद्दिव्योषधैः किं फलम् ।**
**किं सर्पैर्यदि दुर्जनाःकिमु धनैर्विद्याऽनवद्या यदि,**
**व्रीडाचेत्किमुभूषणैः सुकविता यद्यस्ति राज्येन किम् ॥२१॥**

व्यक्ति यदि-क्षमाशील छ भने अरुले प्रहार गर्ने हतियारबाट जोगिन शरीरमा लगाउने कवचको उसलाई के काम ? रिसाइरहन्छ भने उसले अरु बाहिरी शत्रू किन खोज्नू ? उसका बन्धुजन वा नातेदार छन् भने झोस्न आगो किन चाहियो ? सुन्दर मन भएका मित्रजन छन् भने तुरुन्त असर गर्ने खालका दिव्य औषधीहरू के काम ? उसको दुर्जनसँग सङ्गत भए (विषका लागि) सर्प नै किन चाहियो र ? यदि उसँग दोष रहित विद्या छ भने उसलाई धन नै किन चाहियो र ? उसँग लाजशरम छ भने महँगा गरगहना लगाउन जरुरी हुन्छ र ? सुन्दर साहित्यिक गुण छ उसँग भने राज्यले दिने वैभवको उसलाई के मतलब ? ।

**दाक्षिण्यं स्वजने दया परजने शाठ्यं सदा दुर्जने,**
**प्रीतिः साधुजने नयो नृपजने विद्वज्जनेष्वार्जवम् ।**
**शौर्यं शत्रुजने क्षमा गुरुजने नारीजने धूर्तता,**
**ये चैवं पुरुषाः कलासुकुशलास्तेष्वेव लोकस्थितिः ॥२२॥**

नातेदार वा आफन्तहरूप्रति उदार, अरुप्रति दयावान्, दुर्जनप्रति मूर्ख, सज्जनप्रति मायालु, विद्वत्सभाप्रति नीतिवान्, विद्वानहरूप्रति नरम, शत्रुहरूप्रति क्रूर, गुरुजनहरूप्रति क्षमाशील र स्त्रीहरूप्रति धूर्त हुने कलाका कुशल पुरुषहरूबाट नै यो लोकको मर्यादा टिकेको छ ।

**जाड्यं धियो हरति सिञ्चति वाचि सत्यं,**

**मानोन्नति दिशति पापमपाकरोति ।**
**चेतः प्रसादयति दिक्षु तनोति कीर्ति**
**सत्सङ्गसतः कथय किं न करोति पुंसाम् ? ॥२३॥**

असल सङ्गतले : बुद्धिमा हुने मूर्खतालाई नाश गर्दछ, वचनमा सत्यताको सिँचाइ हुन्छ, सन्मानमा वृद्धि हुन्छ, पापलाई हटाउँदछ, चित्तलाई प्रफुल्ल बनाउँदछ र दश वटै दिशामा कीर्तिलाई फैलाउँदछ । असल सत्सङ्गतले मानिसलाई के मात्रै दिँदैन भन त ? ।

**जयन्ति ते सुकृतिनो, रससिद्धाः कवीश्वराः ।**
**नास्ति येषां यशः काये, जरामरणजं भयम् ॥२४॥**

साहित्यमा शृङ्गार, करुण, हास्य, रौद्र, वीर, भयानक, वीभत्स, अद्भुत र शान्त गरी नौ थरी रस हुन्छन् । जुन् कवि यी नवरसमा पोख्त (सिद्ध) हुन्छन् ती धन्य हुन्छन् । तिनीहरूको जय होस् ! उनीहरूको कीर्तिरूपी शरीरलाई बुढ्यौली र मृत्युको डर हुँदैन ।

व्याख्या : जो उत्कृष्ट साहित्यकार हुन्छन् ती कहिल्यै बूढो हुँदैनन्, कहिल्यै मर्दैनन् ।

**सूनुः सच्चरितः सती प्रियतमा स्वामी प्रसादोन्मुखः,**
**स्निग्धं मित्रवञ्चकः परिजनो निःक्लेशलेशंमनः ।**
**आकारो रुचिरः स्थिरश्च विभवो विद्यावदातं मुखं,**
**तुष्टे विष्टपहारिणीष्टदहरौ संप्राप्यते देहिना ॥२५॥**

सदाचारी पुत्र, पतिव्रता पत्नी, प्रसन्न रहने पति, माया गर्ने मित्र, निष्कपट नातेदार, निर्मल मन, सुन्दर आकृति, स्थिर सम्पत्ति र विद्या एवं शोभायमान अनुहार त तिनलाई मात्र प्राप्त हुन्छ जोसँग सबै इच्छा पूरा गराउन समर्थ भगवान् प्रसन्न हुनु हुन्छ ।

**प्राणाघातान्निवृत्तिः परधनहरणे संयमः सत्यवाक्यं-**
**काले शक्त्या प्रदानं युवतिजनकथामूकभावः परेषाम् ।**

**तृष्णास्रोतोविभङ्गो गुरुषु च विनयः सर्वभूतानुकम्पा,**
**सामान्यः सर्वशास्त्रेष्वनुपहतविधिः श्रेयसामेष पन्थाः ॥२६॥**

कुनै पनि जीवको हिंसा नगर्नू, अर्काको धन चोर्न खोज्ने मनलाई रोक्नू, साँचो बोल्नू, समयसमयमा आफ्नो गच्छे अनुसार दान गर्नू, परस्त्रीका विषयमा खराब मनसायले कुरा नगर्नू र अरुले कुरा गरेको पनि नसुन्नू, चाहनाको वेगलाई नियन्त्रण गर्नू, गुरुजनका अगाडि नम्र हु र सबै प्राणिहरु माथि दया गर्नू-सबै शास्त्रका मतमा सामान्यतः यिनै कुरा नै मानिसका कल्याणका मार्ग हुन् ।

**प्रारभ्यते न खलु विघ्नभयेन नीचैः प्रारभ्य विघ्नविहता विरमन्ति मध्याः ।**
**विघ्नैः पुनः पुनरपि प्रतिहन्यमानाः प्रारब्धमुत्तमजना न परित्यजन्ति ॥२७॥**

संसारमा तीन किसिमका मानिस हुन्छन्-नीच, ठिकै खालका (मध्यम) र उत्तम । नीच मानिसहरू "भविष्यमा विघ्नबाधा आउँछ होला" भनेर काम गर्न नै शुरु गर्दैनन् । मध्यम खालका मानिसहरू काम गर्न शुरु त गर्दछन् तर बाधा आएपछि त्यो कामलाई बीचैमा अधुरो छाडिदिन्छन् । तर, उत्तम खालका मानिसहरू आफूले शुरु गरेको काम जतिसुकै र जस्तासुकै बाधा आएपनि पूरा गरेरै छोड्दछन् ।

**असन्तो नाभ्यर्थ्याः सुहृदपि न याच्यः कृशधनः ।**
**प्रिया न्याय्या वृत्तिर्मलिनमसुभङ्गेप्यसुकरम् ॥**
**विपद्युच्चैः स्थेयं पदमनुविधेयं च महतां ।**
**सतां केनोद्दिष्ट विषममसिधाराव्रतमिदम् ॥२८॥**

सत्पुरुषहरू : दुष्टसँग गएर माग्दैनन्, कम धनी मित्रहरूसँग पनि गएर माग्दैनन् । ती न्यायपूर्ण आजीविकाबाट नै सन्तुष्ट रहन्छन् । ज्यान नै जाने अवस्था आएपनि पाप गर्दैनन् । सङ्कटकालमा पनि सदाचारबाट विचलित भई स्खलित हुँदैनन् । महान् व्यक्तिको पदचिह्नको अनुसरण (ती हिँडेको बाटोमा हिँड्दछन्) गर्दछन् । यस्तो तरबारको धारजस्तो अती कठिन व्रत गर्न तिनलाई कसले सिकायो ? कसैले होइन । तिनीहरू स्वभावैले यस्ता हुन्छन् ।

**क्षुत्क्षामोपि जराकृशोऽपि शिथिलप्रायोऽपि कष्टां दशा-**

**मापन्नोऽपि विपन्नदीधितिरपि प्राणेषुनश्यत्स्वपि ।**
**मत्तेभेन्द्रविभिन्नकुम्भकवलग्रासैकबद्धस्पृहः**
**किं जीर्णं तृणमत्ति मानमहतामग्रेसरः केसरी ॥२९॥**

जुन सिँह आफ्नो जातीय मानसम्मानका लागि प्रख्यात छ र मदोन्मत्त हात्तीको चिलाएर रुख, भुइँ आदिमा दरफन्याउँदा ससाना घाउ भई रगत बहिरहेको टाउको खान खोज्दछ; त्यो सिँह जतिसुकै भोको भएपनि, बूढो भएर शिथिल भएपनि, शक्तिहीन भएपनि, अत्यन्त दुःखी र तेजहीन नै भएपनि वा प्राण नै जाने अवस्था आउँदा पनि सुकेको र सडेको घाँस खान कुनै हालतमा पनि तयार हुँदैन ।

**स्वल्पस्नायुवसावशेषमलिनं निर्मांसमप्यस्थिकं ।**
**श्वा लब्ध्वा परितोषमेति न तु तत्तस्य क्षुधाशान्तये ॥**
**सिंहो जम्बुकमङ्कमागतमपि त्यक्त्वा निहन्ति द्विपम् ।**
**सर्वःकृच्छ्रगतोऽपि वाञ्छति जनः सत्त्वानुरूपं फलम् ॥३०॥**

गाई आदि पशुका अलिअलि पित्त र बोसो मिसिएका अनि फोहोर एवं मासु नभएको सानो हाडको टुक्रा पाउँदा भोक नमेटिए पनि कुकुर अति प्रसन्न हुन्छ । तर सिंह, काखमा आएको स्याललाई वास्ता नगरी हात्तीलाई मार्न दगुर्दछ । यसबाट प्रमाणित हुन्छ कि मानिस जतिसुकै दुःखी किन नहुन् ती आफूले गरेको परिश्रम अनुसारकै फलको चाहना गर्दछन् ।

**लाङ्गूलचालनमधश्चरणावपातम् भूमौ निपत्य वदमोदरदर्शनञ्च ।**
**श्वा पिण्डदस्य कुरुते गजपुङ्गवस्तु धीरं विलोकयति चाटुशनैश्च भुङ्क्ते ॥३१॥**

कुकुरलाई हेर्नु होस् त ! उ आफूलाई एकटुक्रा खानेकुरा दिनेका अगिल्तिर (गएर) पुच्छर हल्लाउँदछ, उसका गोडामा गएर शरणपर्दै लुटपुटिन्छ, (यतिले नपुगेर) जमिनमा सुतेर आफ्नो मुख र पेट (समेत) देखाउँदछ । उता अर्कोतिर श्रेष्ठ हात्तीलाई हेर्नु होस् त ! उ आफूलाई टन्न खुवाउने व्यक्तितिर पनि विस्तारै धैर्यतापूर्वक हेर्दछ र (उसलाई) सैयौं चाकडी गर्न लगाएर मात्र खानेकुरा खान्छ ।

व्याख्या :- सामान्य लोभमा फसी इमान, जमान, सन्मान र धर्म बेच्नेहरू र कुकुरमा कुनै भिन्नता छैन । जसले जे दियो गएर हात थापी हाल्ने आदत बदलिनु पर्दछ । दिन ऑँटिएका कुराको शुद्धता र दिनेको नियत पहिचान गर्ने खुबीको विकास गरिनु पर्दछ । आजभोली त दानमा पनि दलाली गरिन्छ ।

**स जातो येन जातेन जाति वंश समुन्नतिम् ।**
**परिवर्तिनि संसारे मृतः को वा न जायते ॥३२॥**

यो परिवर्तनशील वा गतिशील संसारमा मरेर नजन्मने को छ र ? (अथवा जन्मेर नमर्ने पनि को छ र ? जन्म र मृत्यु चक्रभैँ घुमिरहन्छ) तर जन्मनेमध्ये पनि त्यसैको जन्म सफल हुन्छ वा मानिन्छ, जसबाट गरिएको कर्मले (मानव) जाति र वंशको यश वा गरिमा अभिवृद्धि हुन्छ ।

**कुसुमस्तवकस्येव द्वे गतीस्तो मनस्विनाम् ।**
**मूर्ध्नि वा सर्वलोकस्य विशीर्येत वनेऽथवा ॥३३॥**

फूलको गुच्छा समान महापुरुषहरूको पनि दुई किसिमको गति (अवस्था) हुन्छ । कि त ती सबैका शिरमा शोभायमान हुन्छन् कि वनमा फुलेर वनमै ओइलाउँदछन् (कसैलाई अत्तो नै पत्तो नै हुँदैन) ।

**सन्त्यन्येऽपि बृहस्पतिप्रभृतयः संभाविताः पञ्चषा-**
**स्तान्प्रत्येष विशेषविक्रमरुची राहुर्न वैरायते ॥**
**द्वावेव ग्रसते दिनेश्वरनिशाप्राणेश्वरौ भास्वरौ**
**भ्रातः पर्वणि पश्य दानवपतिः शीर्षावशेषीकृतः ॥३४॥**

आकाशमा बृहस्पति आदि गरिएका अरु पनि पाँच छ वटा श्रेष्ठ ग्रहहरू छन् नि, तर असाधारण पराक्रम देखाउन मन हुने राहु अरुसँग वैरभाव राख्दैन । टाउको मात्र बाँकी बचेको भएपनि उ औँशी र पूर्णिमामा क्रमशः दिनका मालिक सूर्यलाई र रातका मालिक चन्द्रमालाई मात्र ग्रस्दछ ।

व्याख्याः- महापुरुषहरू आफूभन्दा साना वा निर्बलसँग शत्रुता मोल्दैनन्, किन कि सानालाई जिते पनि हार हुन्छ, हारे पनि हार हुन्छ । हुरीलाई हेर्नु होस् त उसले

ससाना घाँसपातलाई उखेल्दैन, ठूलठूला रुखलाई मात्र ढाल्दछ । हात्ती आफ्नो टाउकोमा बगिरहेको मद चुस्न आउने भमराप्रति शत्रुभाव राख्दैन । नीचहरू मात्र आफ्नो पुरुषार्थ दुर्बललाई देखाउने गर्दछन् । जो सोझो छ उसकै मुखमा घोचो हाल्दछन् । यस्ता स्वभावका मानिसलाई हावाजस्तो मानिस भनिन्छ । किन कि हावाले दनदनी बलिरहेको बलियो आगोलाई चाहीँ फुक्दै दन्काउँदछ तर बलिरहेकै दियोको निर्बल आगोलाई भने निभाउँदछ ।

**वहति भुवनश्रेणीं शेषः फणाफलकस्थितां ।**
**कमठपतिना मध्येपृष्ठं सदा स विधार्यते ॥**
**तमपि कुरुते क्रोडाधीनं पयोधिरनादरा-**
**दहह महतां निःसीमानश्चरित्रविभूतयः ॥३५॥**

भनिन्छ कि शेषनागले चौध लोकलाई आफ्नो फणामा बोकेको छ । शेषनागलाई पनि अति ठूलो कछुवाले आफ्नो पिठिउँको बीच भागमा बोकेको छ । त्यो कछुवालाई पनि सामान्य र हलुका मानी समुद्रले आफ्नो काखमा राखिरहेको छ । यसबाट स्पष्ट हुन्छ कि ठूलाबडा महान् व्यक्तिको सामर्थ्यको कुनै सीमा हुँदैन, ती जेजति गर्दछन् त्यो थोरै गर्दछन् ।

व्याख्या :- उदाहरणकारुपमा आएका शेषनाग, महाकच्छप र समुद्र साङ्केतिक शब्दहरू हुन् । चौध लोककै विषयमा यथार्थ जानकारी थाहा पाउन नसकेका मानिसले आफूले पृथ्वीमा प्रायः देखिरहेका सर्पलाई शेषनाग, कछुवालाई महाकच्छप र समुद्रलाई महासमुद्र मानिरहेका छन् । त्यसैले यो कुरा हावादारी जस्तो लागिरहेको छ ।

**वरं पक्षाच्छेदः समदमघवन्मुक्तकुलिश-**
**प्रहारैरुद्गच्छद्बहलदहनोद्गारगुरुभिः ॥**
**तुषाराद्रे सूनोरहह पितरि क्लेशविवशे**
**न चासौ संपातः, पथसि पयसां पत्युरुचितः ॥३६॥**

हिमालयका पुत्र मैनाक पितालाई सङ्कटमा छोडेर आफ्नो ज्यान जोगाउन समुद्रका शरणमा गएका थिए । उनले त्यो ठिक गरेनन् । यो भन्दा त उनले पितासँगै बसेर इन्द्रबाट आफ्नो पनि परखैँटा कटाएको भए राम्रो हुन्थ्यो ।

व्याख्या:- कथा लामो छ त्यसैले दिन खोजिएको शिक्षा मात्र लेखौं-सुखमा र दुःखमा पनि मानिसले आफ्नालाई तिरस्कार नगरुन् । जो सुखमा सँगै बसेर दुःख पर्दा पुच्छर लुकाएर भाग्दछ त्यो नराधम हो ।

**यद्चेतनोऽपि पादैःस्पृष्ट ? प्रज्वलति सवितुरिनकान्तः ।**
**तत्तेजस्वी पुरुषः परकृतवि(नि)कृतिं कथं सहते ? ॥३७॥**

अचेतन सूर्यकान्तमणि त सूर्यको गोडा (किरण) ले छुँदा त्यसलाई (आफ्नो) अपमान सम्झी रिसले जल्दछ भने, चेतनशील एवं तेजस्वी पुरुष अरुले गरेको अपमान कसरी सहून् ?

व्याख्या: सूर्यकान्तमणिको दुईवटा अर्थ हुन्छ । पहिलो स्फटिक वा बहुमूल्य पत्थर । दोश्रो यस्तो ऐना जसले सानो वस्तुलाई ठूलो देखाइ दिन्छ र सूर्यको टक (प्रकाश) पर्नासाथ आगो निकाली दिन्छ ।

**सिंहः शिशुरपि निपतति मदमलिनकपोलभित्तिषु गजेषु ।**
**प्रकृतिरियं सत्त्ववतां न खलु वयस्तेजसो हेतुः ॥३८॥**

सिंह, चाहे सानो बच्चा नै किन नहोस्, त्यो हात्तीको मदले मैलिएको गालामा नै झम्टने गर्दछ । यो तेजस्वीको स्वभाव हो । "तेज" को कारण उमेर हुँदैन भन्ने कुरामा शङ्का नगर्नू ।

व्याख्या : यस विषयमा थप उदाहरण यस्ता छन्-राजा भरत सानैमा सिंहको कान समातेर खेल्दथे । कृष्णले बालककालमै पूतना, कंस आदिलाई मारेका थिए । भगवान बुद्ध र विश्वविजेता सिकन्दरले सानै उमेरमा कसैले वशमा पार्न नसकेको घोडालाई वशमा पारेका थिए । उदाउनासाथ बाल-सूर्यको किरण सबभन्दा पहिले सर्वोच्च शिखर श्रृङ्खलाको टाकुरामा पर्दछ । अपवादमा बाहेक कुनै पनि व्यक्तिको भविष्यको लक्षण वालककालमै वा जन्मसिद्ध स्वभावमै देखिन्छ, उमेर बढ्दै गएपछि बदलिन्छ भन्नु आत्मसन्तुष्टि लिनु मात्र हो । यसैले मातापिताले गर्भाधानकालदेखि नै सन्तानोत्पादनमा सम्भव भएसम्मका शुद्धता अपनाउनू, किन कि जन्मने बालकमा माता, पिता एवं उसैको पूर्वजन्मको कर्मको गुण मिसिएर आउँदछ । जन्मेपछि ती

जन्मजात गुणमा निखार लेराउन संस्कार गर्नू र उचित शिक्षा दिनू । किन कि ढुङ्गाले थिचिएपछि श्रीखण्डकै विरुवा भएपनि बढ्न पाउँदैन । कालिदास, वाल्मीकि, विश्वामित्र आदि अपवादमा पर्दछन् ।

**जातिर्यातु रसातलं गुणगणस्तस्याप्यधोगच्छतु**
**शीलं शैलतटात्पतत्वभिजनः सन्दह्यतां वह्निना ॥**
**शौर्ये वैरिणि वज्रमाशु निपतत्वर्थोऽस्तु न केवलं**
**येनैकनेन विना गुणास्तृणलवप्रायाः समस्ता इमे ॥३९॥**

आफ्नो जाति पाताल भासिए पनि भासियोस् , आफ्ना भएभरका सद्गुण त्यसभन्दा पनि तल खसे पनि खसून्, आफ्नो शीलस्वभाव पहाडबाट खसेर धूलोपिठो बने पनि बनोस्, आफन्तहरु आगोमा जलेर खरानी बने पनि बनून्, शूरतामाथि शत्रुरुपी बज्रपात भए पनि होस् (मतलब छैन), केवल धनसँग मतलब राख, किन कि त्यो भएन भने बाँकी सबै गुण झारपात सरह हुने गर्दछन् ।

**तानीन्द्रियाणी सकलानि तदेव कर्म**
**सा बुद्धिप्रतिहता वचनं तदेव ॥**
**अर्थोष्मणा विरहिताः पुरुषः स एव**
**त्वन्यः क्षणेन भवतीति विचित्रमेतत् ॥४०॥**

(मानिसका) शरीरका ती सबै इन्द्रियहरू र तिनले गर्ने कर्म उही हुन्छ । (उसका) बुद्धिले पिट्दै मुखबाट निस्किरहेका वचन पनि उस्तै हुन्छन् । (केही फरक हुन्न) । धनको रापले रापिएको “पुरुष” पनि उही नै हो । तर, धन हुँदा र नहुँदा देखिने उ भित्रको रौनक र उसलाई अरुले हेर्ने दृष्टिकोणमा आकाश जमिनको फरक हुन्छ । यो धनको महिमा पनि बडा विचित्रको छ ! ।

**यस्यास्ति वित्तं स नरः कुलीनः ।**
**स पण्डितः स श्रुतवान्गुणज्ञः ॥**
**स एव वक्ता स च दर्शनीयः ।**
**सर्वे गुणाः काञ्चनमाश्रयन्ति ॥४१॥**

जोसँग धन छ, त्यही मानिस कुलीन हुन्छ, त्यही पण्डित हुन्छ, त्यही शास्त्रवेत्ता र गुणवान् हुन्छ । उही प्रखर वक्ता र सुन्दर हुन्छ । यसरी सबै गुण सुन वा धनमा आश्रय लिइरहेका हुन्छन् ।

व्याख्या : जोसँग धन छ, खानदानको नामोनिशान थाहा नभए पनि त्यो कुलीन हुन्छ । भुत्तोभाङ केही नजान्ने भएपनि उ धुरन्धर पण्डित हुन्छ । शास्त्र सुन्दै नसुनेको र पल्टाउँदै नपल्टाएको भएपनि उ शास्त्रवेत्ता हुन्छ । गुणका नाममा "ग" समेत नभए पनि उ गुणवान् हुन्छ । उसले अपानवायु छाड्दा पनि "क्या सुमधुर सङ्गीत आएको !" भन्न थालिन्छ । तोते बोली बोल्ने वा अप्रासङ्गिक वा बकम्फुसे कुरा गर्ने भएपनि हरेक सभा समारोहको उ प्रमुख वक्ता हुन्छ । आलो गोबरमा असिना परेको जस्तो कुरुप भएपनि उ सुन्दर र दर्शनीय हुन्छ । यसरी सरसरती हेर्दा मानिसका सबै गुण गएर धनमा आश्रय लिइरहेका (जस्ता) देखिन्छन् ।

**दौर्मन्त्र्यान्नृपतिर्विनश्यति यति संगात्सुतो लालना-**
**द्विप्रोऽनध्ययनात्कुलं कुतनायच्छीलं खलोपासनात् ॥**
**ह्रीर्मद्यादनवेक्षणादपि कृषिः स्नेहः प्रवासाश्रयान्मैत्री**
**चाप्रणयात्समृद्धिरनयात्त्यागात्प्रमदाद्धनम् ॥४२॥**

दुष्ट मन्त्रीले राजा, सङ्गतले सन्यासी, लाडप्यारले छोरा (वा छोरी), विद्या (आध्यात्मिक) आर्जन नगर्नाले ब्राह्मण, खराब छोरा (वा छोरी) ले कुल, मूर्खको उपासना गर्नाले शीलस्वभाव, मादक पदार्थ सेवन गर्नाले लज्जा, हेरचाह नगर्नाले कृषि, परदेशमा (छुट्टिएर) बस्नाले माया, माया नगर्नाले मित्रता, अनीति (कुनीति) ले प्रगति (वा समृद्धि) र उन्मत्त भई खर्च गर्नाले धन नष्ट हुन्छ ।

व्याख्या : राजा वा कार्यकारी प्रमुख जतिसुकै इमान्दार भएपनि उसका वरिपरिका मानिस खराब छन् भने उ नष्ट हुन्छ । नेपालमा आफू नखाने तर आफ्नालाई अलकत्रा पनि छाड्न नलगाउने राजनैतिक संस्कार छ, त्यसैले यो स्थिर छैन । वैराग लागेर सन्यासी हुनु अनि फेरी सङ्गततिरै फर्किनु भनेको सन्यास धर्म विरोधी काम हो । स्मृतिहरुले यस्ता सन्यासीलाई तुरुन्त राजाले समाती दास बनाउनू भनेका छन् । सङ्गतमा वैराग्यता हुँदैन । अतिशय लाडप्यारमा व्यावहारिकता र सत्यता हुँदैन, यसैले यस्तो वातावरणमा हुर्केका बालबच्चाले कुनै पनि प्रगति गर्न सक्दैनन् । यस्ता

बच्चा ठूलो भएपछि बाउबाजेको जायजेथा सकी नष्ट हुन्छन् । अध्यात्म ज्ञान नै बाँकी अरु सबै ज्ञानको मूल हो । त्यसैले अध्यात्म ज्ञान बिनाको ब्राह्मणत्व नष्ट हुन्छ । अध्यात्म ज्ञान नभएको ब्राह्मणलाई "ब्राह्मणव्रुव" अर्थात् नाम मात्रको ब्राह्मण भनिएको छ । यस्ता ब्राह्मण अरु विषय जतिसुकै पढेपनि नष्ट हुन्छन् । खराब सन्तान भए तिनले गर्ने क्रियाकलापले कुलकै नाश हुन्छ, वंश लोप हुन्छ । देखिने व्यवहार जस्तो सुकै गरेपनि हरेक मातापितालाई आफू सन्तानको सुयशबाट चिनिन पाए हुन्थ्यो भन्ने चाहना हुन्छ । आफूले मान्ने वा पूजा गर्ने व्यक्तिको आचरण सही छैन वा मूर्खतापूर्ण छ भने आफ्नै आचरण नष्ट हुन्छ, आफू पनि मूर्ख होइन्छ । नेपालको राजनीति र तिनका पछि लाग्नेहरुको चरित्र केलाउनू, थप उदाहरण दिन जरुरी हुन्न । कसैको पछि लाग्नु अघि इन्द्रियलाई होइन विवेकलाई स्वतन्त्र भएर निर्णय गर्न दिनु पर्दछ । नसालू पदार्थ सेवन गर्ने व्यक्तिले अभिव्यक्त गर्ने भावहरु कृत्रिम हुन्छन् किन कि ती भाव उत्सर्जन गर्ने श्रोतमै नशा लागिरहेको हुन्छ । लज्जा पनि एउटा भाव हो । त्यसैले नशालू व्यक्तिमा लज्जा हुँदैन । बेलाबेलामा रेखदेख गरिएन भने जेसुकैको खेती पनि नष्ट हुन्छ । आ देखा जायेगा भन्ने व्यक्ति एक सफल कृषक हुनै सक्दैन । लामो समय छुट्टिएर बसेपछि माया नष्ट हुन्छ । भनिएकै छ "आयो गयो माया मोह, आएन गएन को हो को हो" । नेपालमा दाम्पत्य जीवनमा देखिएका विकृतिको एक प्रमुख कारण यही हो । मायामा शुद्धता छैन, स्वार्थ छ भने मित्रता टिक्दैन । यस सम्बन्धमा भगवान् श्रीराम र हनुमानको कुराकानीको प्रसङ्गलाई उदाहरणका रूपमा पस्कनु सान्दर्भिक हुन्छ । रामचन्द्र भन्नुहुन्छ "हे हनुमान ! तिमीले ममाथि यत्रो उपकार गरेका छौ । तर यो गुन मैले कहिल्यै तिमीलाई तिर्न नपरोस् । किन कि प्रत्युपकारको आश गर्नु भनेको मित्रलाई पनि शङ्कट परोस् भनी चाहना गर्नु हो" । नीतिगत स्पष्टता छैन वा अर्काको वा दातृ निकायको अनुहार हेरेर नीतिहरु बनाइन्छन् भने ती नीति अस्थिर हुन्छन् । अस्थिर नीतिले समृद्धि हासिल गर्न सकिन्न । खर्चका बाटाहरु असीमित हुन्छन् तर आम्दानीका बाटाहरु सीमित हुन्छन् । त्यसैले घाँटी हेरेर मात्र हाड निल्ने गर्नुपर्दछ । देखासिकीमा खर्च गर्न थाल्दा धन कुबेर नै भएपनि एक दिन मगन्ते हुन्छ । उदाहरणका लागि नेपालको वर्तमान राजनैतिक प्रणाली । यस्तो समृद्धि दमाहा जस्तो हुन्छ । भित्र खोक्रो हुन्छ बाहिर भने ठूलो आवाजले बज्ने गर्दछ । यस्तो बालबालिकाले बालुवामा गरा बनाएर खेती गरेजस्तो नीतिले सीमित व्यक्ति धनी हुन्छन् तर देश टाट पल्टिन्छ ।

**दानं भोगो नाशस्तिस्रो गतयो भवन्ति वित्तस्य ।**
**यो न ददाति न भुङ्क्ते तस्य तृतीया गतिर्भवति ॥४३॥**

"धन" हिँड्ने दान, भोग र नाश गरी तीन वटा मात्र बाटो हुन्छ । जसले धन न दानमा दिन्छ, न सदुपभोग नै गर्दछ, त्यस्ताको "धन" हिँड्नका लागि तेश्रो बाटो मात्र बाँकी रहन्छ । अर्थात् दान पनि नदिने र उपभोग पनि नगर्ने कञ्जुसहरूको धन नासिएर सकिन्छ ।

**मणि शाणोल्लीढः समरविजयी हेतिनिहतो ।**
**मदक्षीणो नागः शरदि सरित श्यानपुलिनाः ॥**
**कलाशेषश्चन्द्रः सुरतमृदिता वालललना ।**
**तन्निम्ना शोभन्ते गलितविभवाश्चार्थिषु जनाः ॥४४॥**

उजिल्याउन (सफा गर्न) नपाएर मलिन भएको मणि, हतियारले घायल भई विजयी भएको योद्धा, मदक्षीण भएको हात्ती, शरद ऋतुका कारण सुक्खा भएका नदीका किनारा, थोरै पानी बहने नदी, कला हीन भएका (हँसिया आकारका) चन्द्रमा, पुरुषको हात एवं मुखले रगडिँदै रतिसुखबाट थकित भएकी भर्खरकी युवती तथा भएभरको सम्पत्ति दान दिएर तरितन्नम भएको सज्जन पुरुष-यी सबै नोक्सान हुँदा वा दुर्बल हुँदा वा क्षीण हुँदा पनि शोभायमान हुन्छन् ।

**परिक्षीणः कश्चित्स्पृहयति यवानां प्रसृतये ।**
**स पश्चात्संपूर्ण कलयति धरित्रीं तृणसमाम् ॥**
**अतश्चानैकान्त्याद्गुरुलघुतयाऽर्थेषु धनिना-**
**मवस्था वस्तूनि प्रथयति च सङ्कोचयति च ॥४५॥**

जब मानिस दरिद्र हुन्छ नि ! तब उ एक पसर जौको भुस (पिठो) का लागि पनि मुखबाट पानी निकाल्दछ। दुईचार पैसा र एक छाक पेटभरी खान पाउनुलाई नै ठूलो ठान्दछ । आफूलाई सबभन्दा सानो सम्झन्छ र सबैसँग (हदैसम्मको) नम्रता प्रदर्शन गर्दछ । जब त्यही व्यक्ति धनी हुन्छ तब पूरै पृथ्वीलाई तृणसमान सम्झन थाल्दछ । संसारका सबैलाई झारपात सरह व्यवहार गर्दछ । आफैंलाई सबभन्दा ठूलो ठान्न लाग्दछ । गरिबीले मानिसलाई नम्र र सन्तोषी एवं सम्पत्तिले अभिमानी र असन्तोषी बनाउँदछ । यसबाट स्पष्ट हुन्छ कि परिस्थितिले नै वस्तु वा पदार्थ वा मानिसलाई

सानो वा ठूलो अथवा विस्तारित र सङ्कुचित बनाउने गर्दछ । धन, विद्या आदिजस्ता कुनै पनि वस्तु वा पदार्थ वा व्यक्ति आफैंमा सानो वा ठूलो हुँदैन ।

**राजन्दुधुक्षसि यदि क्षितिधेनुमेतां ।**
**तेनाद्य वत्समिव लोकममुं पुषाण ॥**
**तस्मिंश्च सम्यगनिशं परिपोष्यमाणे ।**
**नानाफलै फलति कल्पलतेव भूमिः ॥४६॥**

हे राजा (शाषक) ! यदि तिमि गाईरूपी पृथ्वीलाई दुहुन चाहन्छौ भने पहिले बाच्छाबाच्छीरूपी प्रजाहरूको पालनपोषण गर । यसो गर्न सक्यौ भने पृथ्वीले तिमीलाई अकल्पनीय ( स्वर्गीय लता समान) फल दिने छिन् । (करका सम्बन्धमा कालिदासले लेखेका छन्-पौराणिक राजा दिलिपले सूर्यको अनुकरण गरे । उनले कर बढाएर जनतासँग धन लिएनन्, जेजति लिन्थे त्यो अरु नै उपायले बढाई जनताकै लागि खर्च गर्दथे, आफ्नो लागि सुको दाम खर्च गर्दैनथे । सूर्यले पृथ्वीको रस सोस्दछन् तर हजार गुना थपेर पृथ्वीलाई नै वर्षा बनाई फर्काउँदछन् )

**सत्याऽनृता च परुषाः प्रियवादिनी च ।**
**हिंस्रा दयालुरपि चार्थपरा वदान्या ॥**
**नित्यव्यया प्रचुरनित्यधनागमा च ।**
**वाराङ्गनेव नृपनीतिरनेकरूपा ॥४७॥**

कतै सत्य त कतै भूट बोलिरहेकी हुन्छे,  कतै चोथाले बनेर मुखमुखै लागिरहेकी हुन्छे भने कतै मीठो बोलेर चेपारो घसिरहेकी हुन्छे, कतै हिंस्रक देखिन्छे त कतै दयालु, कतै लोभी देखिन्छे त कतै उदार, अनि कतै फजूल खर्च गरिरहेकी हुन्छे त कतै खूब जोगाइरहेकी हुन्छे, वेश्याका जस्तै राजनीतिका पनि अनेक रूप हुन्छन् ।

**विद्या कीर्त्तिः पालनं ब्राह्मणानां दानं भोगो मित्रसंरक्षणं च ।**
**येषामेते षड्गुणा न प्रवृत्ताः कोऽर्थस्तेषां पार्थिवोपाश्रमेण ॥४८॥**

जोसँग कुनै ज्ञान छैन, जसको मनैदेखि लोकले प्रशंसा गर्दैन, जसले सदाचारी ब्राह्मणको अस्तित्व जोगाउन कुनै योगदान गर्दैन, जो सत्पात्रलाई फुटेको कौडी दान

दिँदैन, जो कमाएको धनको आफू उपभोग गर्दैन र जो आफन्त वा मित्रलाई संरक्षण पनि गर्दैन, यी छ कार्य जसले गर्दैन त्यस्तो व्यक्ति सरकारी कर्मचारी हुनुको के अर्थ ?

**यद्धात्रा निजभालपट्टलिखितं स्तोकं महद्वा धनं,**
**तत्प्राप्नोति मरुस्थलेऽपि नितरां मेरौ ततो नाधिकम् ।**
**तद्धीरो भव वित्तवत्त्सु कृपणां वृत्तिं वृथा मा कृथाः,**
**कूपे पश्य पयोनिधावपि घटो गृह्णाति तुल्यं जलम् ॥४९॥**

धेर थोर जेजति धन विधाताले तिम्रो भाग्यमा पाउन भनेर लेखी दिएका छन्, त्यो तिमी मरुभूमिमा गएर (बसे) पनि पाउने छौ, त्यसभन्दा बढी मेरु पर्वतमा गए पनि पाउने छैनौ । यसैले सन्तोष गर, धनीका अगाडि धनका लागि अनावश्यक किसिमले दाँत देखाएर माग्ने नगर । हेर त ! गाग्रो, कुवा र समुद्र सबैले एउटै कुरा अर्थात् "पानी" नै बोकेका छन् नि, होइन र ? ।

व्याख्याः मानव ! तिमीले आर्जन र व्यय दुबै कुरामा अरुको देखासिकी गर्न हुन्न । परालको हेलिकप्टर वा छ्वालीको जहाज बनाएर पृथ्वी पल्टाएँ भनी नसोच । आफूलाई अनि लोकलाई पाच्य हुने र फाइदा गर्ने खालका नयाँ कुराहरु गर । हेलिकप्टर र जहाज अरुले नै बनाइ सके, तिमीले नयाँ कुरा गरेनौ भने व्यर्थमा समय मात्र खेर फाल्यौ । खर्च गर्नु पर्दा गरिबलाई सम्झ अनि कमाउनु पर्दा धनीलाई सम्झ । तिमी नाङ्गै आयौ र जाँदा पनि नाङ्गै जान्छौ, त्यसैले नाङ्गिएर प्रसिद्ध हुन नखोज ।

**त्वमेव चातकाधारोऽसीति केषां न गोचर ।**
**किमम्भोदवरास्माकं कार्पण्योक्तिः प्रतीक्ष्यते ॥५०॥**

हे बादल ! तिमी नै म काकाकुलको आधार हौ भनेर कसलाई थाहा छैन र ? तै पनि किन (तिमी) हाम्रो दीन वचन कुरेर बस्दछौ ?

व्याख्या : काकाकुल नामक चराले परेको पानी मात्र खान्छ भनिन्छ । यहाँ यो उपमा दिनुको कारण यसपछिको श्लोकबाट प्रष्ट हुन्छ) ।

**रे रे चातक सावधान मनसा मित्र क्षणं श्रूयता-**
**मम्भोदा बहवो वसन्ति गगने सर्वेपि नैतादृशाः ॥**
**केचिद्वृष्टिभिरार्द्रयन्ति वसुधां गर्जन्ति केचिद्वृथा**
**यं यं पश्यसि तस्य तस्य पुरतो मा ब्रूहि दीनं वचः ॥५१॥**

ए काकाकुल ! ए मित्र ! एक छिन मेरा कुरा ध्यान दिएर सुन । आकाशमा बस्ने बादल धेरै (थरी) हुन्छन्, तर (ती) सबै एकैनासका हुँदैनन् । कुनै बादलले वर्षा गराएर पृथ्वीलाई भिजाइ दिन्छन् त कुनै बादल बेफ्वाँकमा गर्जन्छन् मात्र । यसैले तिमी जसजसलाई देख्दछौ त्यसैका अगाडि दुःखी भएर केही पाउने आशमा गिडगिडाउने नगर ।

**अकरुणत्वमकारणविग्रहः परधने परयोषिति च स्पृहा ॥**
**सुजनबन्धुजनेष्वसहिष्णुता प्रकृतिसिद्धमिदं हि दुरात्मनाम् ॥५२॥**

(१) निर्दयता, (२) बिना कारणको निउँ खोजाइ, (३) अर्काको धनप्रतिको आशक्ति ( ४) परायास्त्रीप्रतिको आशक्ति, (५) सज्जनप्रति असहिष्णुता र (६) नातेदारप्रति असहिष्णुता (उन्नति देखेर डाह हुनु)-यी छ अवगुण दुष्टहरूमा स्वभावैले (प्राकृतिकरूपमै) देखिन्छन् ।

**दुर्जनः परिहर्तव्यो विद्यया भूषितोऽपि सन् ।**
**मणिनालङ्कृतः सर्पः किमसौ न भयङ्करः ॥५३॥**

विद्वान् भएपनि दुर्जन छ भने (उ) त्याग्न योग्य हुन्छ । मणिले अलङ्कृत (टाउकामा नागमणि भएको मानिए पनि) के सर्प डरलाग्दो हुन्न र ?

व्याख्या : अन्यत्र शास्त्रमा विद्यामा एउटा गजबको गुण हुन्छ भनिएको छ-विद्याले सज्जनलाई अझ सज्जन र मूर्खलाई अझ मूर्ख बनाउँदछ । देश : अशिक्षितले भन्दा बढी पढेका मूर्खका कारण बिग्रिने गर्दछ ।

**जाड्यं ह्रीमति गण्यते व्रतरुचौ दम्भ शुचौ कैतवम् ।**
**शूरेनिर्घृणता मुनौ विमतिता दैन्यं प्रियालापिनी ॥**
**तेजस्विन्यवलिप्तता मुखरता वक्तव्यशक्तिः स्थिरे ।**
**तत्को नाम गुणी भवेत्स गुणिनां यो दुर्जनैर्नाङ्कितः ॥५४॥**

जो दुष्ट छन् ती व्यक्ति : लज्जावानलाई मूर्ख, व्रत बस्नेलाई ठग, पवित्रतामा रहने व्यक्तिलाई कपटी, शूरलाई निर्दयी, शान्त रहनेलाई मूर्ख, मिठो बोल्नेलाई सोझो (दीन), तेज दिमाग भएकोलाई घमण्डी, प्रखर वक्तालाई बकवास गर्ने र चित्त स्थिर (शान्त) हुनेलाई असमर्थ (वा नामर्द) भन्दछन् । दुष्टहरूले कलङ्कित नगरेका गुणवान्का कुन गुण छन् र ?

**लोभश्चेदगुणेन किं पिशुनता यद्यस्ति किं पातकैः ।**
**सत्य्र चेत्तपसा च किं शुचिमनो ययस्ति तीर्थेन किम् ॥**
**सौजन्यं यदि किं गुणैः स्वमहिमा यद्यस्ति किं मण्डनैः ।**
**सद्विद्या यदि किं धनैरपयशो यद्यस्ति किं मृत्युना ॥५५॥**

लोभ छ भने अरु दुर्गुणहरु किन चाहियो ? परनिन्दक वा छिद्रान्वेषी छ भने अरु थप पाप किन गर्नु पर्‍यो ? सत्यनिष्ठ छ भने तपस्या किन गर्नू ? मन शुद्ध छ भने तीर्थाटन किन गर्नू ? सज्जन छ भने अरु गुण किन चाहियो ? जसको कीर्ति फैलिएको छ उसलाई महगा वस्त्र र गहनासँग के सरोकार ? उत्तम विद्या जोसँग छ त्यसलाई धन किन चाहियो ? अपयश कमाएको छ (कुख्यात वा मरेतुल्य) भने त्यसलाई मृत्युले पो के नै लछार्दछ र ?

**शशी दिवसधूसरो गलितयौवना कामिनी ।**
**सरो विगतवारिजं मुखमनक्षरं स्वाकृतेः ॥**
**प्रभुर्धनपरायणः सततदुर्गतः सज्जनो ।**
**नृपाङ्गणगतः खलो मनसि सप्त शल्यानि मे ॥५६॥**

दिउसका मलिन (तेज नभएका) चन्द्रमा, जवानी निखिसकेकी (आकर्षण नभएकी) स्त्री, कमलको फूल नभएको तलाउ, अनपढ (नपढेको) सुन्दर व्यक्ति, कञ्जुस (उदारता नभएको) मालिक, सधैं अभावमा जिउने सज्जन (समृद्धिविहीन) र दुष्ट समावेश भएको राजसभा वा मन्त्रिमण्डल-यी सात कुराले (मुखले जतिसुकै ठिक्क पारिरहे पनि) हाम्रो आफ्नो मनलाई भने काँडाले घोचे जसरी (हरपल) घोचिरहन्छ ।

**न कश्चिच्चण्डकोपानामात्मीयो नाम भूभुजाम् ।**
**होतारमपि जुहानं स्पृष्टो दहति पावकः ॥५७॥**

अति रिसाहा (वा सन्काहा) राजा (वा शाषक) कसैको पनि आफन्त हुँदैन (क्रोधी वा सन्काहा शाषकको कहिल्यै विश्वास नगर्नू) । यज्ञकुण्डमा होम गरिरहेको छ भन्दैमा होता (होम गर्ने व्यक्ति) लाई चाहीँ छुँदा आगोले नपोल्ने हुन्छ र ?

व्याख्याः यस सम्बन्धमा पञ्चतन्त्रको एक नीति वचनलाई यहीँ टाँस्न उपयुक्त हुन्छ । “कागमा पवित्रता, जुवाडेमा सत्यता, सर्पमा सहनशीलता, स्त्रीमा वासनाको तृप्ति, नामर्दमा धैर्यता, जँडयाहामा धर्मसम्बन्धी चिन्ता र राजासँग मित्रताका गुण भएको कसले देखेको छ अनि कसले सुनेको छ ?” । अर्थात् यिनमा यी गुण हुँदैन ।

**मौनान्मूकः प्रवचनपटूश्चाटुको जल्पको वा ।**
**धृष्ट पार्श्वे वसति च तदा दूरतश्चाप्रगल्भः ॥**
**क्षान्त्या भीरुर्यदि न सहते प्रायशो नाभिजातः ।**
**सेवाधर्म परमगहनो योगिनामप्यगम्यः ॥५८॥**

मालिक आफ्नो सेवक यदि धेर बोल्दैन चूपचाप बस्दछ भने उसलाई “कस्तो लाटो” भन्दछ, बोल्यो “धेर चापलुसी र बकबक गर्दछस्” भनेर हकार्दछ, नजिकै बसिरहे “कस्तो लिसो जस्तो टाँस्सिइरहेको” भन्दछ, अलि परपर बसे “कस्तो जुम्सो र अटेरी” भन्दछ, सहने बानी छ भने “डरछेरुवा” भन्दछ, सहने बानी छैन भने “कुलाङ्गार” भन्न थाल्दछ । तात्पर्य यो हो की सेवा-धर्म अत्यन्त कठिन हुन्छ, योगीहरुलाई पनि यो धर्म निभाउन सहज हुँदैन ।

**उद्भासिताखिलखलस्य विशृङ्खलस्य ।
प्राग्जातविस्तृतनिजाधमकर्मवृत्तः ॥
दैवादवाप्तविभवस्य गुणद्विषोस्य ।
नीचस्य गोचरगतैः सुखमास्यते कैः ॥५९॥**

जसलाई दुष्टहरूले टाउकामा बोकेर हिँड्दछन्, जो निरङ्कुश छ वा मर्यादामा रहँदैन, जो जन्मजात अधम भएर जन्मिएको छ, जो बिना मेहनत भाग्यले (वा अपराधले वा गैरकानुनी तरिकाले) धनी भएको छ, अनि जो अरुको गुणमा दोष देख्दछ, त्यस्ता नीचको अधिनमा रहने मानिस कोही पनि सुखी हुँदैन ।

व्याख्या : आचरणमा शुद्धता र धनको शुद्धतालाई हरेक पूर्वीय शास्त्रले हरेक धर्मकर्म गर्न पूर्वशर्तका रूपमा मानेका छन् । शास्त्र हरेक व्यक्तिले यी दुई वटा पूर्वशर्तको पालना अनीवार्यरुपमा गर्नू मात्र भन्दैनन्, यी शर्त पालना नगर्नेलाई शाषक नबनाउनू, तिनका अधिनमा नबस्नू र तिनले दिएको नखानू समेत भन्दछन् । दुर्योधन जस्ता दुष्टको अधिनमा रहँदा (उसको आयबाट जीवन चलाउँदा) द्रोणाचार्य एवं भीष्म जस्ताको के हालत भयो ? धृतराष्ट्र, कुन्ती, विदुर, श्रीकृष्ण र पाण्डबले मात्र होइन स्वयं दुर्योधनले पनि बारम्बार तिनै महामानवलाई कोसिरहन्थे । विचराहरु परम ज्ञानी थिए, परम शक्तिशाली पनि थिए, तर जसले गाली गरेपनि घोसे मुन्टो लगाएर सुनिरहन्थे र एकान्तमा गएर रुने गर्दथे ।

**आरम्भगुर्वी क्षयिणी क्रमेण, लघ्वी पुरा वृद्धिमती च पश्चात् ।
दिनस्य पूवार्द्धपरार्द्धभिन्ना, छायेव मैत्री खलसज्जनानाम् ॥६०॥**

दिनको पूर्वार्द्धमा शुरुमा (बिहान) लामो हुने घामको छाया अपराह्नसम्म क्रमशः छोटो छोटो हुँदै जान्छ, फेरी दिनको परार्द्ध (मध्याह्न पछि) शुरुमा छोटो देखिने उक्त छाया क्रमशः लामो लामो हुँदै जान्छ । दुष्ट र सज्जनसँगको मित्रता क्रमशः दिनको पूर्वार्द्ध र परार्द्धमा देखिने घामको छाया समान हुन्छ ।

**मृगमीनसज्जनानां तृणजलसंतोषविहितवृत्तीनाम् ।
लुब्धकधीवरपिशुना निष्कारणवैरिणो जगति ॥६१॥**

मृग, माछा र सज्जनहरू क्रमशः घाँस, जल र सन्तोषले आफ्नो जीवन बिताइरहेका हुन्छन् । तर शिकारी, माझी र दुष्टहरू क्रमशः बिना कारण यिनिहरूसँग रिसइवी गरिरहन्छन् ।

**वाञ्छा सज्जनसङ्गमे परगुणे प्रीतिर्गुरौ नम्रता**
**विद्यायां व्यसनं स्वयोषिति रतिर्लोकापवादाभयम्॥**
**भक्ति शूलिनि शक्तिरात्मदमने संसर्गमुक्तिः खले-**
**ष्वेते येषु वसन्ति निर्मल गुणास्तेभ्यो नरेभ्यो नमः ॥६२॥**

सज्जनसँग सङ्गत गर्न मन गर्ने, अरुको गुणलाई माया गर्ने, आफूभन्दा ठूलासँग नम्र हुने, विद्यामा लत बसेका, आफ्नै श्रीमतीमा मात्र रम्ने, समाजले वा जोरीपारीले केही भन्दछन् कि भनेर हरहमेशा नराम्रो काम गर्न डराउने, शिवभक्त, दृढ इच्छाशक्ति भएका, दुष्टसँगको सङ्गतलाई त्याग गर्ने-यी निर्मल गुण जोसँग हुन्छन् ती मानिसलाई म प्रणाम गर्दछु । (अर्थात् यस्ता गुणका मानिस वन्दनीय हुन्छन्) ।

**विपति धैर्यमथमभ्युदये क्षमा, सदसि वाक्य पटुता युधि विक्रमः ।**
**यशसि चाभिरुचिर्व्यसनं श्रुतौ, प्रकृतिसिद्धमिदं हि महात्मनाम् ॥६३॥**

विपदमा (नहुँदा वा भएको नाश हुँदा) धैर्यता, उत्कर्षमा (हुँदा वा पाउँदा) क्षमा (एवं नम्रता), सभामा बाक्पटुता, युद्धमा पराक्रम, यश कमाउनमा रुची र शास्त्रमा आशक्ति-यी कुरा महात्माहरूमा स्वभावैले हुन्छन् ।

व्याख्या : आजकलत त अरु गुणको खोजिनीति नै हुँदैन, बोल्न जाने पुग्दछ । बोलीकै भरमा कोही राजनैतिक त कोही धार्मिक सन्त भएर आआफ्ना गोप्य र गलत व्यवसाय चलाइरहेका हुन्छन् ।

**प्रदानं प्रच्छन्नं गृहमुपगते सम्भ्रमविधिः ।**
**प्रियं कृत्वा मौनं सदसि कथनं चाप्युपकृते॥**
**अनुत्सेको लक्ष्म्यां निरभिभवसारा परकथाः ।**
**सतां केनोद्दिष्टं विषममसिधाराव्रतमिदम्॥६४॥**

आफूले दिएको दान गोप्य राख्नु, घर आएका पाहुनालाई गच्छे अनुसार स्वागत गर्नु, अरुको उपकार गरेर पनि त्यसलाई बताउँदै नहिँडी चूपचाप हुनु, अरुले गरेको उपकार बताउँदै हिँड्नु, धनी भएर पनि घमण्ड नगर्नु र अरुका कुरा निन्दा नगरी बताउनु : यी गुण सज्जन व्यक्तिमा स्वभावतः हुने गर्दछन् ।

व्याख्याः कसैले नपढाई स्वभावतः यी गुण जोसँग हुन्छन् ती महात्मा हुन्, बाँकी सब ढोँगी हुन् । यसैले महात्मा वा साधु पाउन सजिलो हुँदैन । कसैप्रति उपकार गर्ने क्षमता यस्ता सन्तसँग मात्र हुन्छ अरुसँग हुँदैन, अरु त ब्यापारी मात्र हुन्छन्, धर्मलाई कुकर्म छोप्ने खोल बनाइरहेका हुन्छन् ।

**करे श्लाघ्यस्त्यागः शिरसि गुरुपादप्रणयिता ।**
**मुखे सत्या वाणी विजयि भुजयोर्वीर्यमतुलम् ॥**
**हृदि स्वस्था वृत्तिः श्रुतमधिगतैकव्रतफलम् ।**
**विनाप्यैश्वर्येणं प्रकृतिमहतां मण्डनमिदम् ॥६५॥**

ऐश्वर्य नहुँदा पनि महापुरुषका हात दानले, शीर मान्यजनप्रति नुहुनाले, मुख सत्य बोल्नाले, जय चाहने दुबै हात अतुलनीय पराक्रमले, मन शुद्ध आचरणले र कान शास्त्र श्रवणले शोभायमान भइरहेका हुन्छन् ।

व्याख्याः समाजलाई केही दिनलाई श्रीसम्पत्ति नै चाहिन्छ भन्ने छैन, मन हुनुपर्दछ सदाचार र सामाजिक कर्तव्यका सामान्य जस्ता लाग्ने तर गहन कुरा दिन सकिन्छ । उदाहरणका लागि शिक्षकसँगै यात्रा गरिरहेका विद्यार्थीले वा आमाबासँगै यात्रा गरिरहेको बालकले चकलेट खाएपछि त्यसको खोल सवारी साधनको झ्यालबाट बाहिर फाल्न हुँदैन भनी सिके भने, त्यो नै समाजका लागि धेरै ठूलो योगदान हुन पुग्दछ । सवारी साधन भित्रै फोहोर जम्मा गर्ने भाँडा राख्न सकिन्छ । हामी त हिँड्न समेत योग्य हुन सकेनौ । विमानमा समेत आँखा छलेर यत्रतत्र फोहोर फाल्ने गर्दछौं अन्तका के कुरा गर्नू ?

**संपत्सु महतां चित्तं भवत्युत्पलकोमलम् ।**
**आपत्सु च महाशैलशिलासङ्घातकर्कशम् ॥६६॥**

महापुरुषको चित्त वैभव वा समृद्धिमा कमलको फूलभन्दा पनि कोमल र विपद्मा विशाल पर्वतका पत्थरभन्दा पनि कठोर हुने गर्दछ ।

व्याख्या : महापुरुषहरू दुई किसिमका हुन्छन् : वैरागी (सन्त, महन्त, ऋषि आदि) र मनले सम्मान गर्ने खालका व्यवहारिक व्यक्ति । हामी दुबै खालका महापुरुषको अर्थ नबुझी भ्रममा हुने गर्दछौं । मानिसको स्वार्थलाई नभई मनलाई जसले जित्दछ त्यो महापुरुष हो । राजनेता महापुरुष भित्र पर्ने एक राजनैतिक सम्मान हो । शत्रुको पनि जसले मनैदेखि प्रशंसा गर्दछ अनि शत्रुले पनि जसको मनैदेखि प्रशंसा गर्दछ, त्यस्ता राजनीतिज्ञलाई राजनेता भनिन्छ । नेपालको विगत, वर्तमान र भविष्यको राजनीति केलाई अनिमात्र कसैलाई राजनेताको उपमा दिने गरौं । रौं त रौं नै हो तर टाउकोको रौंलाई र काछको रौंलाई समान ठान्ने संस्कार हाम्रोर राम्रो होइन, नबसाऊँ ।

संतप्तायसि संस्थितस्य पयसो नामपि न ज्ञायते ।
मुक्तकारतया तदेव नलिनीपत्रस्थितं राजते ॥
स्वत्यां सागरशुक्तमध्यपतितं तन्मौक्तिकं जायते ।
प्रायेणाधममध्यमोत्तमगुणाः संसर्गतो देहिनाम् ॥६७॥

तताइएको धातुमा परेको पानी (पाइन हाल्दाको पानी) को नाम पनि रहँदैन, एकैछिनमा हराउँदछ । त्यही र त्यति नै (वा कम) पानी कमलको पातमा पर्दा पनि मोति टल्केझैं टल्केर बस्दछ । फेरी त्यही र त्यति नै पानी स्वाती नक्षत्रमा समुद्रको सीपि (कडा खोलभित्र रहने एकजातको कीरो) मा पर्दा मोति बन्न पुग्दछ । सामान्यतः निम्न, मध्यम र उत्तम गुण मानिसमा सङ्गतका कारण उत्पन्न हुने गर्दछन् ।

व्याख्याः स्वाभाविक सङ्गत पूर्वजन्मको वशमा हुन्छ भनिएको छ । भविष्यमा व्यक्तिले जे भोग्नु छ त्यसै अनुसार उसले सङ्गत बढाउँदछ । विवेकको प्रयोग गरी यसबाट जोगिन सक्नेले भाग्यलाई बदल्न सक्दछ भने यसैसँग बहनेहरु नष्ट हुन्छन् । समाज बदल्न सोच बदलिनु पर्दछ । पाश्चात्य समाजमा पनि पूर्वीय समाजको यो कथनको प्रयोग भइसकेको  अनेक दृष्टान्त पाइन्छन् । जर्मनीमा समान हैसितका पाँच जनालाई एक एक लाख (त्यहाँको मुद्रा) “ल गरी खाओ” भनी दिइयो । पाँच वर्षपछिको नतिजा यस्तो थियो : एक जना त्यही पैसाले जाँड खाएर मरे, एक जना

पागल भए, एक जनाले पसल थापेर गुजारा चलाइरहेका देखिए, एक जनाले बिहे गरी घर किनेर सामान्य जीवन जिउँदै बसेका भेटिए भने एकजना शहरका प्रसिद्ध र धनी ब्यापारी बनेका पाइए । केही कुरा बाँडेर वास्तविक समाजवाद कहिल्यै आउँदैन तर दास मानसिकता भने अवश्य बढ्दछ । वितरण मुखी नीतिले मानिसलाई कर्म र कर्तव्यप्रति उदासीन हुन सिकाउँदछ । समानता अवसरमा दिनु पर्दछ, उपलब्धीमा होइन ।

**यः प्रीणयेत्सुचरितैः पितरं स पुत्रो यद्भर्तुरेव हितमिच्छति तत्कलत्रम् ।**
**तन्मित्रमापदि सुखे च समक्रियं यदेतत्रयं जगति पुण्यकृतो लभन्ते ॥६८॥**

जगतमा यी तीन नाता पुण्यात्माले मात्र प्राप्त गर्दछन् :- (क) जो आफ्नो सदाचारले पितालाई प्रसन्न राख्दछ, त्यही नै पुत्र हो । (ख) जो सधैं आफ्ना पतिको भलो चाहन्छे, त्यही नै पत्नी हो । (ग) जो सुखदुःखमा समान व्यवहार गर्दछ, त्यही नै मित्र हो ।

व्याख्या : यदि पिता, पुत्र, पति, पत्नी, मित्र आदिबाट सुख पाइएको छैन भने त्यसमा ती पात्र निमित्त मात्र हुन्छन् । सुख वा दुःखको प्रमुख कारण व्यक्ति स्वयंको कर्म हुने गर्दछ । यसैले यीबाट सुख पाइएन भने यिनलाई कोस्ने होइन आफ्नो भाग्यलाई कोसी मनको चित्त बुझाउने गर्नू ।

**एको देवः केशवो वा शिवो वा । एकं मित्रं भूपतिर्वा यतिर्वा ॥**
**एको वासः पत्तने वा वने वा । एका नारी सुन्दरी वा दरी वा ॥६९॥**

एउटै देवताको आराधना गर्नु कि श्रीकृष्णको कि श्रीशिवको । मित्रता पनि एउटैसँग गाँस्नु कि राजासँग कि सन्यासीसँग । बस्न पनि एउटै स्थानमा बस्नु कि शहरमा कि जङ्गलमा । नारी पनि एउटैलाई बनाउनु कि सुन्दरी स्त्रीलाई की गुफालाई ।

यो एक प्रसिद्ध श्लोक हो । संस्कृतका अनुरागी प्रायः हरेकका मुखबाट यो श्लोक सुन्न पाइन्छ । हस्तलिखित प्रतिको स्क्यानिङ्ग प्रति सहित सात प्रति पुस्तकमा दिइएका अर्थ र व्याख्याका आधारमा म यो श्लोकको भावलाई तन्काउन प्रयाश गर्दैछु । यस

श्लोकमा प्रयोग भएका सबै शब्द समूहवाचक र भावभावाचक अर्थकारुपमा प्रयोग भएका छन् ।

मानिसका लागि जीवन जिउने दुईवटा मात्र उपाय छन् । कि उसले गृहस्थ बन्नू र गृहस्थ धर्म निभाउनू, नभए सन्यासी बन्नू र सन्यासधर्म निभाउनू । गृहस्थ बन्न चाहन्छौ भने श्रीकृष्णको उपदेशको पालना गर, उनको मानवरुपमा भएका कार्य अनुशरण र अनुकरण गर । होइन सन्यासी हुन चाहन्छौ भने श्रीशिवका उपदेशको पालना गर, उनको आचरणको अनुकरण गर । एउटै देवतालाई मान कि श्रीकृष्णलाई कि शिवलाई भन्नुको अर्थ कि गृहस्थ बन कि सन्यासी बन, दुबैको सम्मिश्रणको जीवन नजिऊ भनिएको हो ।

गृहस्थ हौ भने अर्थोपार्जनको लागि प्रयाश गर, अर्थमा पवित्र अनुराग बसाऊ । राजा आदि गरिएका वित्त आर्जनका श्रोत व्यक्ति वा संस्थालाई मित्र बनाऊ अर्थात् कुनै न कुनै पेसा गर । सन्यास धर्म पालना गर्ने भए सन्यासीलाई नै मित्र बनाऊ, व्यवहारिक संसारमा वा संगतमा नछिर । किन कि गृहस्थको सङ्गतले सन्यासधर्म नष्ट हुन्छ । गृहस्थ हौ भने कुनै न कुनै असल कर्म गरी धन कमाउने उपाय गर, होइन सन्यासी हौ भने धनलोलुपतालाई पूर्णरुपमा परित्याग गर ।

गृहस्थ हौ भने समाजप्रिय बन, तिमीलाई समाज र समाजलाई तिमी चाहिने अवस्थाको सृजना गर । होइन सन्यासी हौ भने सामाजिक बाछिटाले नभेट्ने गरी समाजभन्दा पर एकान्तस्थलमा गई बस्ने गर । वासस्थल एउटै अपनाउनू कि शहरको कि वनको भन्नुको अर्थ यही हो ।

श्लोकको अन्तिम पाउका अर्थमा अलि भ्रमहरु हुने गर्दछन् । यो पाउलाई पनि अरु पाउसँगै लगेर प्रसङ्ग मिलाउँदै अर्थ खोज्नुपर्ने हुन्छ । गृहस्थ हौ भने सुन्दरीको सेवन गर । सन्यासी हौ भने गुफाको सेवन गर । गृहस्थ भएर पनि वैरागी हुँदै स्त्रीको चाहनाबाट विमुख हुने नगर, तर सन्यास भएर पनि स्त्रीसंगको चाहना भने नगर । गृहस्थले मृगनयनीलाई नारी बनाउनू सन्यासीले मृगचर्मलाई नारी बनाउनू । नारी शब्दको यहाँ "ओछ्यान" भनेर लाक्षणिक अर्थ बुझ्नु पर्द५ ।

**नम्रत्वेनोन्नमन्तः परगुणकथनैः स्वान्गुणान्ख्यापयन्तः ।**
**स्वार्थान्सम्पादयन्तो विनतप्रियतरारम्भयत्नाः परार्थे ॥**

**क्षान्त्यैवाक्षेपरूक्षारमुखरमुखान्दूर्जनान्दूषयन्तः ।**
**सन्तः साश्चर्यचर्या जगति बहुमताः कस्यनाभ्यर्चनीयाः ॥७०॥**

जो नम्र भएरै प्रसिद्ध भएका हुन्छन् तिनले अरुको गुणगान गरेरै आफ्नो गुणको पनि नजानिदो किसिमले प्रचार गरिरहेका हुन्छन् । ती निरन्तर अरुको काम गरी दिन्छन् र त्यसै भित्र आफ्नो काम पनि पटयाउने गर्दछन् । अनि यिनले जस्को मुख छुचो हुन्छ तिनलाई पनि क्षमादान दिएर लज्जित बनाइ दिन्छन् : यस्ता आश्चर्यजनक दिनचर्या भएका अत्यन्त सम्माननीय व्यक्तिहरु कसलाई पो मन पर्दैनन् र ?

**भवन्ति नम्रास्तरवः फलोद्गमैर्नवाम्बुभिर्भूरिविलम्बिनो घनाः ।**
**अनुद्धताः सत्पुरुषाः समृद्धिभिः स्वभाव एवैष परोपकारिणाम् ॥७१॥**

जब फल फल्न थाल्दछ, तब वृक्षहरू झुक्न थाल्दछन् । जब पानी पार्नु पर्ने हुन्छ तब घना बादल पृथ्वीतिर झुक्दछ (तलतल आउँदछ) । समृद्धि प्राप्त हुँदा सत्पुरुषहरु झनै नम्र हुन्छन् किन की परोपकारीको स्वभाव नै यस्तै हुन्छ ।

व्याख्या : जो सँग अरुलाई सिँत्तैमा दिने केही कुरा हुन्छ उसको स्वभाव नम्र हुन्छ र उ झुक्दछ । जोसँग अरुलाई दिने कुरा केही हुँदैन उ हरपल ठडिने गर्दछ । पढेको मानिस नम्र हुँदैन भने त्यसले पढेको बेकार हो किन कि विद्याले नम्र हुन सिकाउनु पर्दछ (विद्या ददाति विनयम्) । जतिसुकै पढेको भएपनि यदि उसमा नम्रता छैन भने उसबाट केही सिक्ने आश नै नगर्नू । किन कि उ स्वयंले नै विद्याको वास्तविक गुण ग्रहण गरेको हुँदैन । मिठा, घुटुक्क थुक निल्ने खालका र ठूलठूला कुरा गर्नेहरू प्रायः ढोँगी हुन्छन्, तिनको गतिलो काम गर्ने शक्ति नै हुँदैन । जुन बादल गर्जन्छ, त्यो बादलले पानी पार्दैन । ठूलो नदी सधैँ शान्त भई एकनासले सुसाएर बहन्छ तर खहरे वा खोलो वर्खाका समयमा सबैलाई अत्याउँदै गडगडाएर र वरपरका सबै कुरा सोहोरेर बहन्छ ।

**श्रोतं श्रुतेनैव न कुण्डलेन, दानेन पाणिर्न तु कङ्कणेन ।**
**विभाति कायः करुणापराणां, परोपकारैर्न तु चन्दनेन ॥७२॥**

जो दयालु हुन्छन् नि ! तिनका कान नानाभाँतीका कुण्डलादि गहना लाएर होइन कि शास्त्र सुन्नाले गर्दा सुहाइ रहेका हुन्छन् । तिनका हात नानाथरीका बाला लाएर होइन कि दानले गर्दा सुशोभित भइरहेका हुन्छन् । तिनको शरीर चन्दन आदि अनेक थरी सुगन्धित पदार्थ दलेर वा अत्तर आदि छर्केर होइन कि परोपकारका कारण सुशोभित भइरहेको हुन्छ ।

व्याख्या : परोपकारीको शरीर गनाउने छ कि बास्ना आउने छ भनेर कसैले मतलब गर्दैन ।

**पापान्निवारयति योजयते हिताय**
**गुह्यं च गूहति गुणान्प्रकटी करोति ।**
**आपद्गतं च न जहाति ददाति काले**
**सन्मित्रलक्षणमिदं प्रवदन्ति सन्तः ॥७३॥**

पापबाट विमुख गराउँदै धर्ममा उन्मुख गराउँदछ, गोप्य कुरा खोल्दैन र मित्रका गुणलाई बताउँदै हिँड्दछ, आपद्मा साथ छोड्दैन र परिआउँदा सकेको सहायता पनि गर्दछ-साधुसन्तहरूले यिनै कुरालाई मित्रका लक्षण भनी बताएका छन् ।

**पद्माकरं दिनकरो विकचीकरोति,**
**चन्द्रो विकासयति कैरवचक्रवालम् ।**
**नाभ्यर्थितो जलधरोऽपि जलं ददाति,**
**सन्तः स्वयं परहिते सुकृताभियोगाः ॥७४॥**

परोपकार गर्नेहरु केही पाउने आशमा परोपकार गर्दैनन् । हेर्नुहोस् त ! प्रार्थना नगरिकन नै सूर्यले सूर्यकमलको फूललाई फुलाइ दिने गरेको हुन्छ, हात नजोरे पनि चन्द्रमाले चन्द्रकमलको पूरै समूहलाई फुलाइ दिन्छ, कसैको चाकडी वा अनुनय विनयको आश नगरिकन नै बादलले पानी पारिरहेको हुन्छ । यिनमा लेनदेन वा भेदभावको लेशमात्र पनि गुण देखिन्न ।

व्याख्याः जो केही पाउन अरुलाई उपकार गरी टोपल्दछन् ती परोपकारी होइनन्, ती त सय दिएको नाटक गर्दछन् र लाख असुल्दछन् । परोपकार कसैको दवावमा वा

अनुरोधमा गरिन्न, आत्मामा हरि हुनेहरु स्वभावैले परोपकारी हुन्छन् । जसको शरीरमा दया, माया, प्रेम आदि भावहरु खिया लागेका हुँदैनन् त्यसको आत्मामा मात्र हरि हुन्छन् ।

**एके सत्पुरुषाः परार्थघटकाः स्वार्थं परित्यज्य ये ।**
**सामान्यास्तु परार्थमुद्यमभृतः स्वार्थाविरोन ये ॥**
**तेऽमी मानुषराक्षसाः परहितं स्वार्थाय निघ्नन्ति ये ।**
**ये निघ्नन्ति निरर्थकं परहितं ते के न जानीमहे ॥७५॥**

जो आफ्नो स्वार्थ त्यागेर अरुको काममा लीन हुन्छन् तिनलाई सत्पुरुष (उत्तम व्यक्ति) भनिन्छ । जो आफ्नो स्वार्थसँग नबाझिने हदसम्म परोपकारी हुन्छन् तिनलाई सामान्य (साधारण) मानिस भनिन्छ । जो आफ्नो हीतका लागि अरुको अहित गर्दछन् तिनलाई मानवरुपी राक्षस भनिन्छ । तर जो बेफ्वाँकमा अरुको कुभलो गर्दै हिँड्दछन् तिनलाई चाहीँ के भनेर सम्बोधन गरिन्छ ? मलाई पनि थाहा छैन ।

**क्षीरेणात्मगतोदकाय हि गुणा दत्ताः पुरा तेऽखिलाः ।**
**क्षीरे तापमवेक्ष्य तेन पयसा ह्यात्मा कृशानौ हुतः ॥**
**गन्तुं पावकमुन्मनस्तदभवद्दृष्ट्वा तु मित्रापदं ।**
**युक्तं तेन जलेन शाम्यति सतां मैत्रीपुनस्त्वीदृशी ॥७६॥**

मित्रता होस् त दूध र पानीको जस्तो होस् । दूधले आफ्ना सबै गुण पानीलाई दिने गर्दछ । (तताउँदा) दूध रापमा पाकिरहेको देखेर जल पनि पाकेर सिद्धिन तयार हुन्छ (सुक्दै जान्छ) । उता दूधलाई पानीको दुःख देखेर सही नसक्नु हुन्छ र उ आगोमा हाम फाल्न खोज्दछ (उम्लेर आगोतिर जान खोज्दछ) । फेरी आफ्नू मित्र फर्केर आएको देखेर (जलका छिटा मात्र पर्दा पनि) आगोमा हाम फाल्न लागेको दूध खुशी भएर शान्त हुन्छ ।

**इतः स्वपिति केशवः कुलमितस्तदीयद्विषामितश्च**

**शरणार्थिनः शिखरिणां गणाः शेरते ।**
**इतोऽपि वडवानलः सह समस्त संवर्तकैरहो**
**विततमूर्जितं भरसहं च सिन्धोर्वपुः ॥७७॥**

सज्जनहरू समुद्रजस्ता हुन्छन् । समुद्रलाई हेर त ! उसको शरीरले कति मात्रै बोझ सहन सकेको होला ! यही समुद्रमा एकातिर विष्णु सुतिरहेका छन्, अर्कातिर उनैका शत्रु राक्षहरूको कुल नै बसिरहेको हुन्छ । एकातिर शरणागत पर्वतका समूह हुन्छन् भने अर्कातिर सबैलाई सर्वनाश गर्ने बडवानल नामक अति भयानक अग्नि बसेको हुन्छ ।

व्याख्या : "प्राकृतिक-चक्र जन्य एउटा जीवले फरक जीवलाई गरिरहेको हिंसामा दया देखाउन खोज्ने मानिस आफ्नै जातको हिंसामा भने रमाइरहेको हुन्छ, यो गलत हो । गोहीले खान लागेको माछालाई बचाएर दया देखाएको हुँदैन, एउटालाई बचाएर अर्कोको आत्मा रुवाएको हुन्छ । अधिकार क्षेत्र अतिक्रमण भई हुने यस्ता गतिविधिमा हस्तक्षेप गर्नु दया गर्नु हुन्छ । जस्तै : नारायण भगवानबाट गरिएको गजेन्द्र-मोक्ष" । व्याख्याको सार यही हो ।

**तृष्णां छिन्धि भज क्षमां जहि मदं पापे रतिं माकृथाः ।**
**सत्य्र ब्रूह्यद्वनुयाहि साधुपदवीं सेवस्य विद्वज्जनम् ॥**
**मान्यान्मानय विद्विषोऽप्यनुनय प्रख्यापय स्वान्गुणान्-**
**कीर्तिं पालय दुःखिते कुरु दयामेतत्सतां लक्षणम् ॥७८॥**

लोभ गर्न छोड, क्षमा दिन सिक, घमण्डलाई त्याग, पापतिर आशक्त नहोऊ, साँचो बोल, सज्जनको आचरणलाई अनुशरण गर, विद्वानको सेवा गर, मान्नुपर्ने व्यक्तिलाई सन्मान गर, शत्रुसँग पनि नम्रतापूर्ण व्यवहार गर, आफूले कमाएको यशलाई जोगाऊ, दुःखी माथि दया गर-यिनै कुरा सज्जनले भन्ने र गर्ने गर्दछन् ।

**मनसि वचसि काये पुण्यपीयूष पूर्णा-**
**स्त्रिभुवनमुपकार श्रेणिभिः प्रीयणन्तः ।**
**परगुणपरमाणून्पर्वतीकृत्य नित्यं**

**निजहृदि विकसन्तः सन्ति सन्तः कियन्तः ॥७९॥**

मन, वचन र शरीर सत्कर्मरूपी अमृत सिञ्चित भइरहने, उपकार गरी गरी तीनै लोकलाई खुशी पारिराख्ने अनि अरुको सानोतिनो गुणलाई पनि पहाड जत्रो बनाएर वा मानेर प्रसन्न भइरहने सज्जन वा सन्त कति नै होलान् र ?

**किं तेन हेमगिरिणा रजताद्रिणा वा ।**
**यत्राश्रिताश्च तरवस्तरवस्त एव ॥**
**मन्यामहे मलयमेव यदाश्रयेण ।**
**कङ्कोलनिम्बकुटजा अपि चन्दनाः स्युः ॥८०॥**

हामीलाई स्वर्गको सुमेरु र चाँदीको कैलाश पर्वत के गर्नु ? जहाँ उम्रने बोटविरुवा, सधैं बोटविरुवा नै भइरहन्छन् । हामीलाई त मलयाचल पर्वतको त्यो शक्ति चाहिन्छ, जुन शक्तिले गर्दा जहाँ उम्रने फलकपुर, नीम, ठूलोकुरो आदि सबै बोटविरुवाहरू चन्दन (श्रीखण्ड) सरह हुन पुग्दछन् ।

व्याख्याः आवश्यकता र बोझ बोक्न सक्ने क्षमतालाई प्राथमिकताका विषय बनाउनू, सपनालाई होइन । सुनको भारी बोकेर घरसम्म पनि पुग्न सकिएन भने त्यो सुनले के गर्नु ?

**रत्नैर्महार्हैस्तुतुषुर्न देवा न भेजिरे भीमविषेण भीतिम् ।**
**सुधां विना न प्रययुर्विरामं न निश्चितार्थाद्विरमन्ति धीराः ॥८१॥**

धैर्यधारण गर्नेहरू आफूले चाहेको कुरा नपाउँदासम्म बीचमै रोकिँदैनन् । समुन्द्र मन्थनको प्रसङ्गलाई हेर त-बहुमूल्य रत्नहरु निस्किए, देवताले सन्तोष मानेनन् । विष (हलाहल) पनि त निस्कियो, तैपनि देवताहरू डराएनन् । अमृत प्राप्तिका लागि गरिएको त्यो प्रयत्न अमृत पाएपछि मात्र देवताले छाडेका थिए ।

व्याख्या : चाल्नुले केही कुरा चालेजसरी उद्यम बदलिरहने मानिस जीवनमा कहिल्यै सफल हुँदैन ।  सोचेर काम शुरु गर्नु र एकपटकको होइन पटकपटकको असफलताबाट पनि नआत्तिनू । असफलताको कारण पत्ता लगाई पुनः सफल हुने

प्रयत्न गरी रहनू । सफलता हात लागेपछि त्यसैमा नयाँ नयाँ तरिकाले विशिष्टीकरण गर्दै जानू । संसारमा जतिपनि मानिस महान् भएका छन्, यसरी नै महान भएका छन् ।

**क्वचिद्भूमौ शय्या क्वचिदपि च पर्यङ्कशयनम् ।**
**क्वचिच्छाकाहारः क्वचिदपि च शाल्योदनरुचिः ॥**
**क्वचित्कन्थाधारी क्वचिदपि च दिव्याम्बरधरो ।**
**मनस्वी कार्यार्थी न गणयति दुःखं न च सुखम् ॥८२॥**

ती कहिले भुइँमै त कहिले शानदार पलङमा सुत्दछन्, कहिले सागमात्र चपाएर बस्दछन् त कहिले वासमती चामलको भात खान्छन् अनि कहिले लाजमात्र छोपेर त कहिले रेशम र मखमलका वस्त्र लगाएर हिँड्दछन् । मनको अभिलाषा पूरा गरेरै छाड्ने दृढ अठोट भएका व्यक्तिलाई सुख र दुःखको कुनै परवाह हुँदैन ।

व्याख्याः जो यी कुरामा भिन्नता देख्दछन्, तिनको मन, वचन र कर्ममा विश्वास नगर । ती ढोंगी हुन् । जसको शरीरले विलासिता मात्र खोज्दछ तर आयश्रोत बढाउन जाँगर गर्दैन, त्यो शरीर चाँडै नाश हुन्छ ।

**ऐश्वर्यस्य विभूषणं सुजनता शौर्यस्य वाक्संयमो ।**
**ज्ञानस्योपशमः श्रुतस्य विनयो वित्तस्य पात्रे व्ययः ॥**
**अक्रोधस्तपसः क्षमा प्रभवितुर्धर्मस्य निर्व्याजता ।**
**सर्वेषामपि सर्वकारणमिदं शीलं परं भूषणम् ॥८३॥**

सम्मृद्धिको आभूषण सज्जनता हो । वीरताको आभूषण वचनमा नियन्त्रण गर्नु हो । ज्ञानको आभूषण शान्ति, धर्मशास्त्रको आभूषण नम्रता, धनको आभूषण सत्पात्र वा उचित स्थानमा गरिने खर्च, तपस्याको आभूषण नरिसाउनु, मालिकको आभूषण क्षमा र धर्मको आभूषण निश्छलता (निष्कपटता) हो । तर, यी सबैको कारण वा आभूषण भने असल शीलस्वभाव नै हो ।

व्याख्या : सुन्दरतामा निखार लेराउन लगाइने गहना वा प्रयोग गरिने श्रृङ्गारका साधनलाई अलङ्कार वा आभूषण भनिन्छ । शरीरको बाहिरी आवरणमा चमक

लेराउनका लागि अलङ्कार भए जस्तै मानिस भित्रका भाव वा गुणमा निखार लेराउने विभिन्न कुराहरु हुन्छन् , यसलाई पनि आभूषण नै भन्ने गरिएको छ । जस्तै : नारीलाई सुन्दर देखिने लोभ छ भने लज्जाशील हुनु, लज्जा नारीले प्रयोग गर्ने सबै खाले गहनाको पनि गहना हो । सर्वोत्तम आभूषण हो ।

**निन्दन्तु नीतिनिपुणा यदि वा स्तुवन्तु**
**लक्ष्मी समाविशतु गच्छतु वा यथेष्टम् ।**
**अद्यैव वा मरणमस्तु युगान्तरे वा**
**न्याय्यात्पथः प्रविचलन्ति पदं न धीराः ॥८४॥**

नीतिविद्हरूले निन्दा गरुन् वा प्रशंसा, मनग्गे धन आओस् वा जाओस्, तुरुन्त अहिले नै मरियोस् वा युगयुगान्तरसम्म बाँचियोस् : धैर्यवान् पुरुष आफ्नो बाटो बदल्दैनन् ।

**भग्नाशस्य करण्डपीडिततनोर्म्लानेन्द्रियस्य क्षुधा ।**
**कृत्वाखुर्विवरं स्वयं निपतितो नक्तं मुखे भोगिनः ॥**
**तृप्तस्तत्पिशितेन सत्वरमसौ तेनैव यातः पथा ।**
**लोकाः पश्यत दैवमेव हि नृणां वृद्धौ क्षये कारणम् ॥८५॥**

एउटा सर्प बन्द सन्दुकमा फसेर भोकले आकुलब्याकुल भई इन्द्रिय शिथिल पार्दै निराश भएर बसिरहेको थियो । के के न खान पाइन्छ भनेर खोज्दै त्यो सन्दुक प्वाल पार्दा, एउटा मुसा सर्पको मुखमा खस्न पुगेछ । मुसाको मासुले टन्न अघाएर उसैले पारेको दुलो हुँदै सर्प बाहिर निस्किएछ । त्यसैले हे लोक ! मानिसको उत्थान र पतनको प्रधान कारण भाग्य नै हो ।

**पातितोऽपि कराघातैरुत्पतत्येव कन्दुकः ।**
**प्रायेण साधुवृत्तानामस्थायिन्यो विपत्तयः ॥८६॥**

हातले जोडसँग हिर्काई भुइँतिर बजारिएको (हावा भरिएको) बल माथितिर नै उफ्रने गर्दछ । सदाचारले भरिएका व्यक्तिलाई पर्ने आपद्‌बिपद् (दैबको हातले हानिएको झापड) प्रायः स्थाई वा दीर्घकालीन हुँदैन ।

व्याख्या:- आपद्‌मा पनि धैर्य र धर्म नछोड, धर्मात्माहरू हिँडेको बाटो नै हिँडिरहू, ईश्वरको दयाले तुरुन्त आपद् टर्दछ । सुख वा दुःख ईश्वरले लिने परीक्षा हुन् । जीवनमा सुख र दुःख भइरहन्छन् । सुखमा नमात्तिनू, दुःखमा नआत्तिनू ।

**आलस्यं हि मनुष्याणां शरीरस्थो महान् रिपुः ।**
**नास्त्युद्यमसमो बन्धुर्यं कृत्वा नावसीदति ॥८७॥**

शरीरमै रहने “अल्छीपन” नै मानिसको सबभन्दा ठूलो शत्रु हो । (अनि त्यही शरीर भित्र रहने) “उद्यम” समान (अरु कोही) मित्र हुँदैन । (यो मित्रसँग मित्रता गाँस्नाले वा केही न केही इलम गरेर बस्नाले) जीवनमा कहिल्यै दुःख हुँदैन । शरीरलाई सुख दिन खोजे जीवन दुःखदायी हुन्छ । शरीरको बनोट मेशिन जस्तै हुन्छ थन्क्याएर राखे काम लाग्दैन ।

**छिन्नोऽपि रोहति तरुः क्षीणोऽप्युपचीयते पुनश्चन्द्रः ।**
**इति विमृशंतः सन्तः संतप्यन्ते  न पिप्लुता लोके ॥८८॥**

काटिएको रुख फेरी फेरी पलाइरहेको अनि घटेको चन्द्रमा फेरी फेरी बढिरहेको देखेका महात्माहरू आपत्‌विपद्‌मा पीर गरेर बसिरहँदैनन् ।

**नेता यस्य बृहस्पतिः प्रहरणं वज्रं सुराः सैनिकाः ।**
**स्वर्गो दुर्गमनिग्रहः किल हरेरैरावतो वारणः ॥**
**इत्यैश्वर्यबलान्वितोऽपि बलिभिर्भग्नः परैः सङ्गरे ।**
**तद् व्यक्तं वरमेव दैवशरणं धिग्धिग्वृथा पौरषम् ॥८९॥**

जसका सल्लाहकार एवं गुरु बृहस्पति छन्,  जोसँग बज्रजस्तो हतियार छ, देवता नै जस्का सेना छन्,  जस्को स्वर्ग जस्तो किल्ला छ, ऐरावत जस्तो हात्ती छ अनि

जस्माथि भगवान् श्रीकृष्णको पूर्ण कृपा भइरहन्छ, यस्तो ऐश्वर्य र बल हुने इन्द्रले पनि (प्रायः) शत्रुसँग हारिरहनु पर्दछ । यसैले कर्म गर्नु ब्यर्थ रहेछ, भाग्यकै भर पर्नु वेश हुन्छ ।

**कर्मायत्तं फलं पुंसां बुद्धिः कर्मानुसारिणी ।**
**तथापि सुधिया भाव्यं सुविचार्यैव कुर्वता ॥९०॥**

विगतमा (यो जुनीमा र पूर्वजन्ममा) जेजस्तो कर्म गरिएको हुन्छ, त्यही अनुसार मानिसले फल पाउँदछ । बुद्धि पनि कर्म अनुकूलकै हुन्छ । पूर्वजन्मको कर्मको फललाई बदल्न सकिन्न तर यसजन्मको कर्मलाई नियन्त्रण र व्यवस्थित गर्न सकिन्छ, यसैले बुद्धिमानले खूब सोचविचार गरेर मात्र कार्य गर्नु पर्दछ । नेपालीमा उखान नै छन् "भाग्यमा छ भन्दैमा डोकामा दूध दोहेर अडिँदैन" । छहगि सकेपछि दैलो देखेर के काम ?" ।

**खल्वाटो दिवसेश्वरस्य किरणैः संतापितो मस्तके ।**
**वाञ्छन्देशमनातपं विधिवशात्तालस्य मूलं गतः ॥**
**तत्राप्यस्य महाफलेन पतता भग्नं सशब्दं शिरः ।**
**प्रायो गच्छति यत्र भाग्यरहितस्तत्रैव यान्त्यापदः ॥९१॥**

प्रायशः अभागी जता जता जान्छ त्यतै त्यतै दुर्भाग्य पनि गइरहेको हुन्छ । जस्तैः घामले तालु पोलेर ताडको रुख मुनी शितल ताप्न पुगेको तालुखुईले व्यक्तिकै टाउकामा ताडको फल खस्दछ र ठूलो आवाज आउँदै टाउको फुट्दछ ।

**शशिदिवाकरयोर्ग्रहपीडनं गजभुजङ्गमयोरपि बन्धनम् ।**
**मतिमतां च विलोक्य दरिद्रतां विधिरहो बलवानिति मे मति : ॥९२॥**

भर्तृहरि फेरी भन्दछन्-"चन्द्र र सूर्यलाई हेर्दछु ती पनि बेलाबेलामा ग्रहणले पीडित भइरहेको देख्दछु, हात्ती र सर्पलाई हेर्दछु ती पनि बन्धनमा परिरहेको देख्दछु अनि विद्वानहरुलाई पनि हेर्दछु ती पनि दुःखी एवं दरिद्री भइरहेको देख्दछु । अनि मलाई "ओहो ! सबभन्दा बलियो त भाग्य नै रहेछ" भन्ने लाग्दछ ।

**सृजति तावदशेषगुणाकरं पुरुषरत्नमलंकरणं भुवः ।**
**तदपि तत्क्षणभङ्गि करोति चेदहह कष्टमपण्डिता विधेः ॥९३॥**

कति दुःख लाग्दो कुरा ! भएभरका गुण जम्मा पारेर तिमीले पुरुष (मानिस) बनायौ
तर त्यसलाई केही समयमै नासिने बनायौ ।
विधाता तिमीले मूर्खतापूर्ण काम गर्‍यौ ।

**पत्रं नैव यदा करीरविटपे दोषो वसन्तस्य किं ।**
**नोलूकोऽप्यवलोकते यदि दिवा सूर्यस्य किं दूषणम् ॥**
**धारा नैव पतन्ति चातकमुखे मेघस्य किं दूषणम् ।**
**यत्पूर्वं विधिना ललाटलिखितं तन्मार्जितुं कः क्षमः ॥९४॥**

करिल नामक वृक्षमा पात पलाउँदैन त यसमा वसन्त ऋतुको के दोष ? लाटोकोसेरो दिउस आँखा देख्दैन त यसमा सूर्यको के दोष ? परेको पानी मात्र खाने काकाकुल चराको मुखमा पानी पर्दैन त त्यसमा पानीपार्ने बादलको के दोष ? जे कुरा विधाताले पहिले नै निधारमा लेखि दिएका हुन्छन्, त्यसलाई मेट्न कसैको तागत छैन ।

**नमस्यामो देवान्ननु हताविधेस्तेपि वशगा**
**विधिर्वन्द्यः सोऽपि प्रतिनियतकर्मैकफलदः ।**
**फलं कर्मायत्तं किममरगणैः किं च विधिना**
**नमस्तत्कर्मभ्यो विधिरपि न येभ्यः प्रभवति ॥९५॥**

हामी देवतालाई नमस्कार गर्ने गर्दछौं । तर, ती पनि भाग्यका वशमा भएका देखिन्छन् । त्यसैले भाग्य लेख्ने विधाता (नै) वन्दनीय छन् । (तर) उनी पनि पहिले नै तोकिएका कर्मका आधारमा नै फल दिन्छन् । फल (त) कर्मका अधिनमा पो रहेछ त । देवता र भाग्यले के नै काम दिँदो रहेछ र ? अतः भाग्य पनि जस्को अधिनमा हुन्छ म त्यो कर्मलाई नमस्कार गर्दछु ।

**ब्रह्मा येन कुलालवन्नियमितो ब्रह्माण्डभाण्डोदरे ।**

**विष्णुर्येन दशावतारगहने क्षिप्तो महासंकटे ॥**
**रुद्रो येन कपालपाणिपुटके भिक्षाटनं कारितः ।**
**सूर्यो भ्राम्यति नित्यमेव गगने तस्मैः नमः कर्मणे ॥९६॥**

जस्ले कुम्हालेलाई माटाका भाँडा बनाउन लगाए जसरी भगवान् ब्रह्मालाई नियमितरुपमा ब्रह्माण्डरुपी भाँडा बनाउन लगायो, जस्ले भगवान् विष्णुलाई पटकपटक दश अवतार लिन लगाई आपद्मा पारि रह्यो, जस्ले भगवान शिवको रुद्ररुपलाई  हातमा खोपडी लिई भिक्षा माग्दै हिँड्न बाध्य बनायो अनि जस्ले भगवान् सूर्यलाई आकाशमा घुमिरहन बाध्य बनायो, तिनलाई त्यो सबै गराउने पनि आखिर कर्म नै त थियो । त्यसैले (म) कर्मलाई नमस्कार गर्दछु ।

**नैवाकृतिः फलति नैव कुलं न शीलं,**
**विद्यापि नैव न च यत्नकृतापि सेवा ।**
**भाग्यानि पूर्वतपसा खलु सञ्चितानि,**
**काले फलन्ति पुरुषस्य यथैव वृक्षाः ॥९७॥**

अनुहार, कुल खानदान, बानीव्यहोरा, विद्या वा सेवाले (मात्र) व्यक्तिको जीवनमा उन्नति वा अवन्नति हुने होइन ।  समान अनुहार, एउटै कुल, उस्तै बानी, बराबरको पढाइ र उस्तै सेवा लिने वा दिनेहरुका बीचमा पनि समानता हुँदैन । कसैले उन्नति गरिरहेका हुन्छन्, कोही अवन्नति तिर ओरालो लागिरहेका हुन्छन् । यिनले गर्ने उन्नति वा पाउने अवन्नतिका बीचमा पनि समानता हुँदैन ।  वास्तवमा जसरी रुखले समय आएपछि फल दिने गर्दछ त्यसैगरी पूर्व जन्ममा सञ्चित कर्मले नै मानिसलाई फल दिने गर्दछ ।

**वने रणे शत्रु जलाग्निमध्ये महार्णवे पर्वत मस्तके वा ।**
**सुप्तं प्रमत्तं विषमस्थितं वा रक्षन्ति पुण्यानि पुराकृतानि ॥९८॥**

वनमा, युद्धमा, शत्रु-पानी-आगोका बीचमा, समुद्रमा अथवा पहाडको चुचुरोमा, असावधान भई निदाएको बेलामा वा विषम परिस्थितिमा पूर्वजन्ममा गरिएका सत्कर्महरुले मानिसको रक्षा गर्दछ । (आखिर यो सत्कर्म भनेको के हो त ? उपनिषद

लेख्दछ-कुनै पनि आत्मालाई ठेस नपुऱ्याई आफ्नो आत्मालाई नै प्रसन्न पार्ने खालका कुनै पनि काम गर्नु भनेकै सत्कर्म गर्नु हो ।)

**या साधूंश्च खलान्करोतिविदुषो मूर्खान्हितान्द्वेषिणः ।**
**प्रत्यक्षं कुरुते परोक्षममृतं हालाहलं तत्क्षणात् ॥**
**तामाराधय सत्क्रियां भगवतीं भोक्तुं फलं वाञ्छितम् ।**
**हे साधो व्यसनैर्गुणेषु विपुलेक्ष्वास्थां वृथा मा कथाः ॥९९॥**

हे सज्जन ! यदि इच्छा अनुसार फलको उपभोग गर्न चाहन्छौ भने माता दुर्गाका सत्कर्महरुको पूजा गर, जुन पूजाले दुष्टलाई सज्जन, मूर्खलाई विद्वान, शत्रुलाई मित्र, नदेखिनेलाई देखिने र विषलाई अमृत बनाइ दिने गर्दछ । कष्टदायक अन्य गुणमा व्यर्थमा विश्वास नगर ।

**गुणवदगुणवद्वा कुर्वदा कार्यमादौ**
**परिणतिरवधार्या यत्नतः पण्डितेन ॥**
**अतिरभसकृतानां कर्मणामाविपत्ते-**
**र्भवति हृदयदाही शल्यतुल्यो विपाकः ॥१००॥**

राम्ररी सोचविचार नगरी हतारहतारमा गरिएका कर्मका फलले आजीवन काँडाले घोचे जसरी चस्स चस्स मुटु घोचिरहने हुने गर्दछ, अतः बुद्धिमान व्यक्तिले उपयोगी वा अनुपयोगी कुनै पनि कार्य शुरु गर्नुभन्दा पहिले नै वा बोल्नुभन्दा पहिले नै त्यसका परिणामका बारेमा प्रयत्नपूर्वक विचार गर्नू ।

व्याख्या : केही कुराको क्रिया वा प्रतिक्रिया (फल) नियत र परिस्थितिको अधिनमा हुने गर्दछ । कुकुरले टोकेपछि पहिला त्यो कुकुर बहुला कुकुर हो कि होइन थाहा पाउनु पर्दछ । अन्यथा गरिएका निर्णयले आफैंलाई पागल बनाउँदछ । समाजमा यस्ता मानिस पनि हुन्छन् जसलाई कसैले नामर्द भनी गाली गर्दा आफ्नै हात टोकी टोकी रक्ताम्ये बनाउँदछन् । अनि हातबाट रगत चुहाउँदै "देखिस् मेरो मर्दानगी" भन्दै हिँड्दछन् ।

**स्थाल्यां वैदूर्यमय्यां पचति च लशुनं चान्दनैरिन्धनौघैः ।**

**सौवर्णैर्लाङ्गलाग्रैर्विलिखति वसुधामर्कमूलस्य हेतोः**
**छित्त्वा कर्पूरखण्डान्वृतिमिह कुरुते कोद्रवाणां समन्ता-**
**त्प्राप्येमां कर्मभूमिं न चरति मनुजो यस्तपो मन्दभाग्यः ॥१०१॥**

यो कर्मभूमिमा जन्म लिएर पनि जो असल कर्म (तप) गर्दैन त्यो त्यस्तै मूर्ख हो जो चन्दनका दाउरा बाल्दै वैदूर्यमणिले बनाइएको भाँडामा लसुन पकाउँदछ वा आँकको जरो निकाल्न सुनको फाली जडित हलोले खेतबारी जोत्दछ (खन्दछ) वा कोदोबारीका वरिपरि कपुरको रुख काटेर लगी टुक्रा टुक्रा पारेर छर्दछ ।

**मज्जत्वम्भसि यातु मेरुशिखरं शत्रूञ्जयत्वाहवे ।**
**वाणिज्यं कृषिसेवनादिसकला विद्याः कलाः शिक्षतु ॥**
**आकाशं विपुल प्रयातु खगवत् कृत्वा प्रयत्नं परम् ।**
**नाभाव्यं भवतीहकर्मवशतो भाव्यस्य नाशः कुतः ॥१०२॥**

संसारमा बेलाबेलामा मानिसहरू "हुनै नसक्ने कुरा भयो" भन्छन् । यो भ्रम हो । जे विगतमा भयो, जे अहिले भइरहेको छ वा जे भविष्यमा होला, सबै हुने कुरा नै भए, भइरहेका छन् र हुनेछन् । कर्मगतिको अन्त कहिल्यै हुँदैन । हुने कुरालाई "हुन दिन्न टार्दछु" भनेर कोही चाहे पानी भित्र डुबेर बसोस् वा कुनै पर्वत (सुमेरु) को टुप्पोमा गएर बसोस्, युद्ध गरेर शत्रुलाई जितोस् वा कुनै ब्यापार गरोस्, खेतीकिसानीमा रमाओस् वा कुनै सेवा कार्यमा, सबै विद्या र कला सिकोस् वा विस्तृत आकाशमा चरा उडेझैं उडिरहोस्, हुने कुरा नभइकन छाड्दै छाड्दैन ।

**भीमं वनं भवति तस्य पुरं प्रधानम् ।**
**सर्वो जनः सुजनतामुपयाति तस्य ॥**
**कृत्स्ना च भूर्भवति सन्निधिरत्नपूर्णा ।**
**यस्यास्ति पूर्वसुकृतं विपुलं नरस्य ॥१०३॥**

जुन व्यक्तिसँग जन्मान्तरदेखिको सत्कर्मको फल सञ्चित छ उसका लागि घना जङ्गल पनि सुन्दर शहर बन्दछ, सबै उसका हितैषी हुन्छन् र उसका वरिपरिका सारा जमिन बहुमूल्य रत्नले भरिपूर्ण हुन जान्छ ।

**को लाभो गुणिसङ्गमः: किमसुखं प्राज्ञेतरैः सङ्गतिः ।**
**का हानिः समयच्युतिर्निपुणता का धर्मतत्वे रतः ॥**
**कः शूरो विजितेन्द्रियः प्रियतमा कानुव्रता किं धनं ।**
**विद्या किं सुखमप्रवासगमनं राज्यं किमाज्ञाफलम् ॥१०४॥**

के गर्दा फाइदा हुन्छ ? गुणीहरूको सङ्गतले । दुःख के हो ? मूर्खहरूसँगको सङ्गत । नोक्सान के हो ? समय खेर फाल्नु वा बेलामा चुक्नु । दक्षता के हो ? धर्मतिरको आशक्ति । वीर को हो ? जसले इन्द्रियलाई जितेको छ । प्रेयसी को हो ? आफू अनुकूल जो हुन्छे । धन के हो ? विद्या । सुख के हो ? विदेश नजानु (वा जान नपर्ने वातावरण हुनु) । राज्य के हो ? आज्ञाको पालना हुने ठाउँ (कानुनी राज्य) ।

**मालतीकुसुमस्यं द्वे गतीह मनस्विनः ।**
**मूर्ध्नि वा सर्वलोकस्य शीर्यते वन एव वा ॥१०५॥**

उच्च विचार भएका मानिस (सन्त, मुनि, तपस्वी, राजा आदि) का चमेली फूलको जस्तै दुई वटा मात्र चाल (गति) हुन्छ, कि त ती सबै मानिसका शिरमा कि वनमा शोभायमान हुन्छन् । (पुराणहरु पनि भन्दछन् -धर्मका ठेकेदारहरु : जसको चाल शङ्कास्पद हुन्छ अनि जो आम मानिसलाई सुखी एवं शान्त बनाउनुको साटो दुःखी एवं अशान्त बनाउँदै र गृहस्थ जीवनलाई भाँड्दै हिँड्दछन्, ती सन्त होइनन् । आश्रम धर्मलाई विभिन्न तर्क दिएर छ्यासमिस बनाउनेहरू ढोंगी हुन् ।) ।

**अप्रियवचनदरिद्रैः प्रियवचनाढ्यैः स्वदारपरितुष्टैः ।**
**परपरिवादनिवृत्तैः क्वचित्क्वचिन्मण्डिता वसुधा ॥१०६॥**

पृथ्वी कतैकतै मात्र यस्ता व्यक्तिले अलङ्कृत भएकी हुन्छिन् जो शब्दबाण प्रहार गर्न कञ्जुस हुन्छन्, आफ्नै पत्नीबाट तृप्त भइरहेका हुन्छन् र अर्काको निन्दा गर्नु परे पछिपछि सर्दछन् । (अर्थात् यो पृथ्वीमा कटुवचन नबोल्ने, आफ्नै पत्नीसँग मात्र रम्ने र अरुको निन्दा गर्न मन नपराउने व्यक्ति विरलै मात्र पाइन्छन्) ।

**कदर्थितस्यापि हि धैर्यवृत्तेर्न शक्यते धैर्यगुणः प्रमार्ष्टुम् ।**
**अधोमुखस्यापि कृतस्य बह्नेर्नाधः शिखा याति कदाचिदेव ॥१०७॥**

धीर व्यक्तिले जति सुकै दुःख पाए पनि कहिल्यै धैर्यता छोड्दैन । बलिरहेको आगोलाई हेर्नुहोस् त, जतिसुकै घोप्ट्याएर बाले पनि ज्वाला जहिले पनि माथितिर नै जाने गर्दछ, तलतिर कहिल्यै जाँदैन ।

**कान्ताकटाक्षविशिखा न दहन्ति यस्य ।**
**चित्तं न निर्दहति कोपकृशानुतापः ॥**
**कर्षन्ति भूरिविषयाश्च न लोभपाशै-**
**र्लोकत्रयं जयति कृत्स्नमिदं स धीरः ॥१०८॥**

वास्तविक अर्थमा भन्ने हो भने त्यो व्यक्तिलाई नै धैर्यशाली व्यक्ति भनिन्छ जसको मन कामिनी स्त्रीका कटाक्षले घायल हुँदैन, जसको चित्तलाई क्रोधरुपी अग्निको आँचले जलाउँदैन र जसलाई लोभरुपी डोरीले बाँधी कहिल्यै भोगविलासले तान्न सक्दैनन् ।

**एकेनापि हि शूरेण पादाक्रान्तं महीतलम् ।**
**क्रियते भास्करेणेव परिस्फुरिततेजसा ॥१०९॥**

जसरी एउटै सूर्यले (सारा संसारमा) प्रकाश फैलाए जस्तै एउटै वीरले सारा पृथ्वीलाई आफ्नो पैंतालाको अधिनमा पार्दछ ।

**वह्नितस्य जलायते जलनिधिः कुल्यायते तत्क्षणात्-**
**मेरुः स्वल्पशिलायते मृगपतिः सद्यः कुरङ्गायते ॥**
**व्यालो माल्यगुणायते विषरसः पीयूषवर्षायते**
**यस्याङ्गेऽखिललोकवल्लभतमं शीलं समुन्मीलति ॥११०॥**

जुन् व्यक्तिसँग सारा संसारलाई मोहित पार्ने शीलस्वभाव छ, उसका लागि : आगो पानीसमान, समुद्र खोपिल्टो (खोला) समान, सुमेरु पर्वत सानो ढुङ्गासमान, सिंह मृगसमान, सर्प फूलको मालासमान र विषपनि अमृतसमान हुन पुग्दछ ।

**लज्जागुणौघजननीं जननीमिव स्वाम्-**
**अत्यन्तशुद्धहृदयामनुवर्तमानाम् ।**
**तेजस्विनः सुखमसूनपि संत्यजन्ति**
**सत्यव्रतव्यसनिनो न पुनः प्रतिज्ञाम् ॥१११॥**

**॥ इति भर्तृहरिकृत नीतिशतकम् सम्पूर्णम् ॥**



तेजस्वी तथा सक्कली (समाजले वास्तविकरूपमा मान्न योग्य) व्यक्ति बरु ज्यान सजिलैसँग दिन्छ तर लाजशरम आदि गुण–समूहलाई जन्माउने, आफूलाई जन्माउने आमाको जस्तै शुद्ध मन बनाउने (वा भएकी) र आफ्नै अधीनमा रहने "प्रतीज्ञा" बाट कहिल्यै विमुख हुँदैनन् ।

**॥ भर्तृहरिले लेखेको नीति शतकंको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपालीमा भावानुवाद तथा व्याख्या सकिएको छ ॥**



**सबैको कल्याण होस् !**